# सगुण उपासना र निर्गुण उपासना

**सगुण उपासना**– सर्वज्ञ, सर्वशक्तिमान, शुद्ध, नित्य, आनन्द, सर्वव्यापक, एक, सनातन, सर्वकर्ता, सर्वाधार, सर्वस्वामी, सर्वनियन्ता, सर्वान्तर्यामी, मङ्गलमय, सर्वानन्दप्रद, सर्वपिता, सम्पूर्ण जगत् का रचयिता, न्यायकारी, दयालु आदि सत्यगुण हरु ले युक्त जुन ईश्वर को उपासना गरिन्छ त्यो नै **सगुणोपासना** हो ।

**निर्गुण उपासना**– शब्द, स्पर्श, रूप, रस, गन्ध, संयोग, वियोग, हलुंगो, गह्रूंगो, अविद्या, जन्म, मृत्यु र दुःख आदि गुण हरु बाट रहित परमात्मा लाई जानेर उसैको उपासना गर्नु **निर्गुण उपासना** हो ।

- महर्षि दयानन्द सरस्वती

[आर्योद्देश्यरत्नमाला]

# आर्याभिविनय

- अनुवादकः- कमलाकान्त आत्रेय
- संस्करणः- प्रथम
- प्रतिः- १०००
- सृष्टि सम्बत्ः १,९६,०८,५३,११७
- माघः- सं. २०७३ नेपाल सम्बत ११३७ (सन्२०१७ फेब्रुअरी)
- मूल्यः-
- प्राप्ति स्थानः- १. प्रणवकुञ्ज, मेचीनगर-३, धुलाबारी, (खनाल बस्ती) झापा
  २. नेपाल आर्य समाज केन्द्रीय कार्यालय, बानेश्वर हाईट, काठमाण्डौ-१०
  ३. श्री गुरुकुल माध्यमिक विद्यालय विराटनगर-१८, मोरङ्ग
  ४. नेपाल आर्य समाज, टीकापुर शाखा, कैलाली
- अक्षर संयोजन/आवरणः सन्तोष मान श्रेष्ठ
  ओलिभ प्रिन्टिङ्ग एण्ड डिजाईन हाउस
  बागबजार, काठमाण्डौ, ०१-४२६६९६८

# अनुवादक को कलम बाट

सत्य सनातन वैदिक धर्म एवं आर्यसंस्कृति का अन्यतम उपासक, आर्षवाङ्मय का प्रकाण्ड विद्वान्, उच्चकोटी का लेखक -चिन्तक र प्रवचनकर्त्ता, राष्ट्रभक्त, मानवता का पुजारी, दया र करुणा का सागर, धर्माचार्य, धर्मादित्य, आदित्य ब्रह्मचारी, भक्तप्रवर, योगीराज एवं युगप्रवर्त्तक महर्षिदयानन्द सरस्वती ज्यूको प्रभुभक्ति रसले लवालब भरिएको प्रसिद्ध कृति **आर्याभिविनय** नेपाली भाषा मा रूपान्तर गरी प्रस्तुत गरिएको छ। भगवत्पाद महर्षिदयानन्द सरस्वती ईश्वरका प्रति कति अनुरक्त हुनुहुन्थ्यो एस आर्याभिविनय को अध्ययन ले अनुमान गर्न सकिन्छ। वहाँले वेद बाट प्रभुभक्ति रस ले भरिपूर्ण मन्त्र हरु को चयन गरी उस करुणा - वरुणालय अन्तर्यामी परमेश्वर को ध्यान मा निमग्न भएर स्तुति प्रार्थना र उपासना गर्नुभएको छ।

महर्षिवर ले स्तुति र प्रार्थना मा ईश्वर संग विशेष गरी स्वदेश को उन्नति, ऐश्वर्य, सुख , शान्ति र समुन्नति को कामना का साथै जनता मा शिक्षा, सच्चरित्रता,बल, साहस, ओज, तेज, निर्भयता, स्वदेश प्रेम, पुरुषार्थ, र पराक्रम को कामना गर्नु भएको छ। आफ्नो मुक्ति को कामना मात्र हैन अपितु वहाँले मानव मात्र को मुक्ति को कामना गर्नु भएको छ।

वेद र वैदिक धर्मका लागी उत्सर्गीकृतकाया, समाज सुधारक ऋषिवर दयानन्द को जीवनी अत्यन्तै पवित्र र उच्च छ। एकसाथ अनेकौं गुण हरु ले शोभित वहाँमा स्वराष्ट्रभक्ति त खाँदिइ - खाँदिइ भरिएको छ। इतिहास मा एस्ता पुरुष कमै भेटिन्छन् जुन ईश्वर को भक्ति धारा मा अवगाहन गर्ने र राष्ट्र का प्रति पनि समर्पित हुने। प्रसिद्ध इतिहासकार एवं वैदिक विद्वान् भगवद्दत्त लेख्तछन्- सर्वगुण सम्पन्न योगीराज भगवान् श्रीकृष्ण का पश्चात् पाँच हजार वर्षको लामो अन्तराल पछि दिव्य आत्मा महर्षि दयानन्द को आगमन भएको हो। ईश्वर का अनन्य भक्त योगिराज भगवान् श्रीकृष्णज्यू जसरी योग समाधि

मा घण्टौं-घण्टौं निमग्न रहनुहुन्थ्यो तेस्तै दयानन्द ज्यू पनि १८– १८ घण्टा समाधि मा रहनुहुन्थ्यो । वहाँले शिव शंकर को साक्षातकार गर्नु भयको थियो ।

भगवान् श्रीकृष्ण को स्वर्गारोहण पश्चात् र अन्य ऋषि कल्प आप्त विद्वान् पुरुष हरु को पनि देहावसान भए पछि आर्यावर्त मा नजाने कति नराम्रा दिन आए- सर्वप्रथम त व्यक्तिपूजावाद, मूर्तिपूजावाद आयो अनि अवतारवाद, वाममार्ग, मायावाद (जगन्मिथ्यावाद), शून्यवाद, अनीश्वरवाद, झुट्टोअहिंसावाद, दास-दासी प्रथा, देवदासी प्रथा, सतिप्रथा, जन्मना जाति प्रथा, जूवा, वारुणी अर्थात् मदिरा, मांसाहार, फलित ज्योतिष, पण्डाप्रथा आदि थुप्रै महारोग र व्याधि हरु ले ग्रस्त विशाल आर्यवर्तलाई चारैतिरबाट गाँजे । श्रेष्ठ, विद्वान्,आप्त, देशभक्त योद्धा एवं निरभिमानी वीर पूरुष को दिनप्रतिदिन अभाव हुँदै गयो । जसले गर्दा निज मातृभूमि दीन-हीन दरिद्रअवस्था मा यवन हरु द्वारा पददलित र पछि अंग्रेज हरु द्वारा पददलित बन्न पुगेकोरहेछ । एस्तो अत्यन्तै शोचनीय समयमा स्वामी दयानन्द सरस्वती ज्यूको यहाँ आगमन भएको थियो।

वहाँको जन्म भारत वर्ष को गुजरात प्रान्त को मौर्वी राज्य अन्तर्गत टंकारा नामक गाउँ मा सम्वत् १८८१ साल फाल्गुन कृष्ण पक्ष दशमी तिथिका दिन भएको थियो । वहाँका पिता श्रीकृष्णजी तिवारी दाल्भ्य गोत्रीय औदिच्य सामवेदी तिवारी थरी ब्राह्मण थिए । आमा को नाम थियो अमृता बाई । स्वामी ज्यू को बाल्याकाल को नाम मूलशंकर थियो ।

श्रीकृष्णजी तिवारी शैव मतावलम्बी थिए । उनको स्वाभाविक इच्छा थियो कि उनको छोरा पनि शिवभक्त बनोस् । यदा-कदा मूलशंकर लाई पनि शिवोत्सवहरु मा संगै लिएर जाने गर्दथे । सम्वत्

१८९४ साल मा मूलशंकर को आयू १४ वर्ष को थियो, एसै वर्ष शिवरात्री को पर्व मा उनलाई पिताले शैवमत को दीक्षा दिने

निश्चय गरी व्रत बस्न लगाए । मूलशंकर उत्साहित थिए, आमा ले निषेध गर्दा-गर्दै पनि उपवास बस्ने दृढता देखाए । पिता ले मूलशंकर लाई संझाए कि भरे राति रातभरी नै जाग्राम बस्नुपर्छ, जाग्राम बसिएन भने व्रत निष्फल हुन्छ । शिवरात्री का दिन नगर देखि बाहिर को ठूलो शिवमन्दिर मा पिता-पुत्र पूजा को सर-सामान लिएर गए । मन्दिर मा कथा-वार्ता चलीरहेको थियो।

रात्री को प्रथमार्ध को पूजा सकिंदा रात निक्कै छिप्पीइ सकेको थियो । सरल हृदय बालक मूलशंकर सावधान छन्, निद्रा आउँछ कि भन्ने डर छ । उता रातभरी बस्नेअठोट गरेका भक्तजन हरु दिनभरी को पूजा-आजा र दौड धूप ले होला निद्रा ले उँघ्न थाले र निद्राका वश वर्ती भई सबै निद्रा देवी का काख मा समाधिस्थ भए । आफ्नै पिताश्री जो अत्यन्त कट्टर शिवभक्त हुनुहुन्छ, वहाँ पनि उँघ्न थाल्नुभो र एक छिनमा त्यहीं पल्टिएर घुर्न थाल्नुभो । अब एक मात्र मूलशंकर जागा छन् घरि-घरि आँखा मा पानी छ्याप्छन् निद्रा नआओस् भनेर । व्रत भंग हुने डर छ । शिवदर्शन का अभिलाषि बालक आँखा झिमिक्क नगरी शिवलिंग लाई हेरिरहेका छन् । निस्तब्ध मध्यरात छ । तेत्तिखेरै त्यहाँ एउटा सामान्य घटना भयो । मन्दिर को नाली बाट २-३ वटा मुसा निक्लिए र खुर्र कुद्दै आएर शिवलिंग माथि बुरुक्क उफ्रेर चढे र दण्ड-बैठक गर्न थाले अनि नैवेद्य आदि को आनन्द ले भोग लगाउन थाले । हरे यो के हो ! एस घटना ले जसरी बादल मा बिजुली को रेखा मिलिक्क चम्किन्छ, जसरी समुद्र मा उत्ताल तरंग उठ्तछन् तेसैगरी मूलशंकर का हृदय मा पनि विचार का तरङ्ग हरु उठ्न थाले। मैले त सुनेको थिएँ कि शिव त्रिपुरारी हुन्, त्रिशूल धारी र पाशुपतास्त्र धारी हुन् तथा दानव संघारकारी हुन् । तर यो कस्तो शिव हो जुन क्षुद्र मुसाहरु बाट पनि आफ्नो रक्षा गर्न सक्तैन उनको जिज्ञासा शान्त भएन । उनले पिता ज्यू लाई जगाएर समाधान चाहे तर पिता ज्यू ले केही समाधान दिन सक्नुभएन । एस घटना ले मूल जी को हृदय मा घात-प्रतिघात उत्पन्न गऱ्यो ।

आज को यस क्षण बाट मूलशंकर को मूर्तिपूजा बाट सदा का लागी आस्था समाप्त भयो । मन मा उनले प्रतिज्ञा गरे म वास्तविक शिवको खोजी गर्नेछु र शिवदर्शन गर्नेछु । उनि उठेर मन्दिर बाट बाहिर निस्किए र सिधै घर आए र आमा का श्रीचरण मा उपस्थित भए भने "आमा मैले व्रत छोडि दिएँ मलाई भोजन दिनु होस् ।" आमा ले शान्तभाव ले मूल जी का सबैकुरा सुन्नुभयो र भोजन गराउनुभयो ।

आजको एस शिवरात्री को सामान्य घटना ले मूलशंकर लाई दयानन्द बन्ने सूत्र पात गर्‍यो ।

एस विशाल संसार मा अनेकौं साना-मसिना घटना हरु सर्वसाधारण हरु का अगाडी घटिनै रहन्छन् । जनसाधारण का दृष्टि मा तिन ले कुनै महत्व राख्तैनन्। तर इनै साधारण घटना ले महापुरुष हरु का जीवन मा महान् परिवर्तन गराईदिन्छन् । इतिहास साक्षि छ, अत्यन्त साधारण घटना हरु ले संसार मा ठूला-ठूला क्रान्ति मच्चाइ दिएका छन्, हेरौं-

[१] रोगी लाई, वृद्ध लाई र लास बोकेर स्मशान तिर गइ रहेको मलामी को लर्को लाई मानिस ले सधैं नै देखि रहन्छन् तर इनै साधारण घटना ले **शाक्यराजकुमार सिद्धार्थ गौतम** लाई त्यो बोध प्रदान गरे जसको प्रभाव आज सम्म आधा संसार मा विद्यमान छ । इनै दृश्यहरु ले उद्बुद्ध बुद्ध को दया र करुणा ले करोडौं प्राणीहरु लाई निर्दय रक्त पात बाट बँचाएर मायाँ को स्रोत बगाइरहेको छ ।

[२] रूख बाट फल झरेको हजारौं मानिस ले प्रति दिन देख्तछन्, तर एस दृश्यले **सरआइज्याक न्यूटन** को दिव्य दृष्टि ले फल तल झर्ने क्रिया ले पृथ्वी को गुरुत्वाकर्षण को मूल तत्व लाई साक्षात्कार गर्‍यो ।

[३] भाँडा मा उम्लिंदै गरेको पानी को भापले बिर्को मास्तिर उचालिने दृश्य अनेकौं मानिस का आँखा ले देखिनै रहेका

हुन्छन् । तर **न्यूकोम्यान** महाशय का दूरगामिनी दृष्टिले तेस मा विद्यमान **वाष्पशक्ति को बीज देख्न सक्यो र वाष्प इन्जिन को आविष्कार** भयो ।

[४] रूख का पातहरु का बीच बाट छानिएर निक्लिने सूर्य का किरण को आलोक मानिस हरु ले सधैं देखिनै रहेका हुन्छन् । तर इटली देश निवासी **पोटौ** महानुभाव ले एक दिन दिउँसो एउटा रूख को फेद मा आराम गरीरहेका बेला मा तेही दृश्य देखेर **आलोक चित्र** फोटोग्राफी को मूल सिद्धान्त खोजेर निकाले ।

एस्तै प्रकार को एक सामान्य घटना थियो त्यो शिवरात्री को घटना । १४ वर्षीय मूलशंकर को दृष्टि ले शिवपिण्ड माथि मुसा चढेर उफ्रेको देखे । तर आज हामी देख्छौं तेस नगण्य घटना ले धार्मिक , समाजिक एवं राजनैतिक सबै क्षेत्रमा समेत अपूर्वक्रान्ति उत्पन्न गरी दिएको छ । आज करोडौं व्यक्ति उस महापुरुष दयानन्द का पदचिन्ह मा हिडिरहेका छन् ।

सांसारिक विषय वासमा देखि परांमुख रहेका तथा वास्तविक शिव-शंकर-महादेव को खोज गरी पत्तो लगाएरै छाड्ने दृढ प्रतिज्ञ मूलशंकर २२ वर्षको युवा अवस्था मा फेरि कहिल्यै नफर्किने गरी वि.सं. १९०३ मा घर छोडेर निक्लिए । एक कुनै आश्रम मा पुगी नैष्टिक ब्रह्मचर्यदीक्षा लिई ब्रह्मचारी **शुद्धचैतन्य** नाम प्राप्त गरी विद्याभ्यास र योगाभ्यास मा अहर्निश लागे ।

ब्रह्मचारी शुद्धचैतन्य अपूर्व मेधाका धनी र वहाँको तर्कशक्ति अद्भुत चमत्कारिणी थियो । वहाको गहिरो चिन्तनको सामर्थ्य अति नै उत्कृष्ट थियो । वेदाभ्यास, योगाभ्यास र विद्याको लालसा तीव्रतर थियो । वहाँको एक दिन के एक क्षण पनि व्यर्थ जाँदैनथ्यो । अनेकौं विद्वान् योगी र सन्त हरु सँग अध्ययन मा कहिल्यै अनध्याय भएन ।

२ वर्ष पछि २४ वर्षको उमेर मा नर्मदा तट मा दाक्षिणात्य

विद्वान् संन्यासी स्वामी पूर्णानन्द संग युवा ब्रह्मचारी शुद्धचैतन्य ले विधिवत् संन्यास आश्रम को दीक्षा ग्रहण गरी **स्वामी दयानन्द सरस्वती** नाम प्राप्त गर्नुभयो । गुरुवर पूर्णानन्द सँग ब्रह्मविद्या का ग्रन्थ हरु को निकै दिन गहिरो अध्ययन गर्नुभयो । तत्पश्चात् गुरुदेव सँग विदा भएर हिमालय को यात्रा मा प्रवृत्त हुनुभयो । हिमालय का अनेकौं स्थान हरु को दर्शन गर्दै अनेकौं योगी, महात्मा, सन्त पुरुष हरु सँग सत्संग, धर्मचर्चा, योगाभ्यास र देशदशाको चर्चा गर्दै आनन्दको अनुभुति गर्नुभयो ।

स्वामी दयानन्द सरस्वती को आकर्षण एस्तो थियो- लगभग ७ फिट अग्लो कद, उन्नत भाल,दीर्घवाहु, सुन्दर एवं ज्योर्तिमय मुखमण्डल, गोरो शरीर, चुचोनाक, र ढुंगाजस्तो खँदिलो शरीर । वहाँ जहाँ पुग्नुहुन्छ, त्यहाँ मानिसहरुको भीड लाग्छ वहाँको दर्शन गर्न । भित्र अभिमान छैन, दर्प छैन, म ठूलो हूँ भन्ने दम्भ छैन । अद्भुत तर्क शक्ति छ उत्तर कसैबाट बन्दैन । मेरो अध्ययन पूर्ण भएको छैन, गुरुको खोजीमा छु भन्नु हुन्छ । बोलचालको भाषा संस्कृत छ, तर एक साधारण मानिसले पनि वहाँले बोलेको बुझ्दछ । यो सबै भएर पनि स्वामी जी लाई २ वटा कुराले रात दिन सताएको छ । एक हो मातृभूमिको पराधीनता र दोश्रो हो अपूर्ण अध्ययन लाई पुरा गर्न गुरुको तलास । कहिले काँही ज्यादै छट्पटाउनु हुन्छ, अशान्त हुनुहुन्छ । हिमालय को यात्रामा ज्योतिर्मठ का विद्वान् महन्त ले परामर्श दिएका थिए तपाईंले स्वामी पूर्णानन्द सरस्वती कनखलमा हुनुहुन्छ वहाँसंग पढ्नु होस् तपाई को कामना सिद्ध हुनेछ । तर त्यतिखेरै देशभक्त दयानन्द का कान मा प्रथम स्वतन्त्रता संग्राम को शंख नाद सुनाई पऱ्यो र आफ्नो अध्ययन लाई स्थगित गरी तेस महान् काम का लागी तिब्र गति ले तेस तर्फ प्रस्थान गर्नु भयो ।

पराधीन मातृभूमि को उद्धार हेतु युवा संन्यासी दयानन्द बिठूर, कानपुर, मेरठ, झाँसी देखि लिएर अटक-देखि कटक सम्म र पेशावर देखि बंगाल को गंगा सागर सम्म पदयात्रा गरी क्रान्ति

को सन्देश जनता लाई सुनाउनुभयो । स्वामी दयानन्द ले महान् देश भक्त-**महासेनानी तांत्योटोपे, महारानी लक्ष्मीबाई, मंगल पाण्डे, नानाजी धोन्दुपन्त पेशवा** आदि क्रान्तिकारी हरु लाई भेटी मार्गदर्शन गर्नुभयो । सन् १८५७ ई. को प्रथम स्वतन्त्रता संग्राम को श्रेय स्वामी दयानन्द ज्यू लाई निकै नै जान्छ । क्रान्तिकारी मंगल पाण्डे ले दयानन्द ज्यू लाई आफ्नो एकमात्र गुरु मानेका छन् । एसरी देश को स्वाधीनता का लागी स्वामी ज्यू ले लगभग पाँच वर्ष भूमिगत रूप मा रहनुभयो ।

पाँच वर्षपछि, ३६ वर्षीय स्वामी दयानन्द ज्यू पुनः आफ्नो अध्ययन पूरा गर्न कटिबद्ध भइ हरिद्वारस्थ कनखल आएर र स्वामी पूर्णानन्द सरस्वती ज्यू लाई भेट्नुभयो र पढाउन निवेदन गर्नु भयो । तर स्वामी पूर्णानन्द ज्यू को आयु तेतिखेर ११० वर्ष भएको रहेछ, वहाँले दयानन्द लाई अत्यन्त स्नेह गर्दै भन्नुभयो दयानन्द ज्यू ! "म वृद्धत्व का कारण पढाउन असमर्थ छु, तर मेरा परम शिष्य व्याकरण शास्त्र का **ख्याति प्राप्त विद्वान् प्रज्ञाचक्षु स्वामी विरजानन्द दण्डी** मथुरा मा विद्यालय चलाएर बस्नुभएको छ । वहाँसंग गएर पढ्नु तपाईंको मनोरथ पूर्ण हुनेछ ।" स्वामी दयानन्द अत्यन्त उत्साहित हुँदैं वहाँसंग विदा भएर मथुरा तिर प्रस्थान गर्नु भयो। सम्वत् १९१७, कार्तिक शुल्क द्वितीयका दिन मथुरा पुगेर दण्डी ज्यू को विद्यालय मा उपस्थित हुनुभयो । दण्डी ज्यू आफ्नो शिष्य को प्रतिक्षा मा धेरै दिन देखि पर्खि बस्नुभएको थियो जुन आज आईपुग्यो, मनमनमा गद्गद् हुदै इश्वरलाई धन्यावाद दिनुभयो र निक्कै कठोर परीक्षा पछि दयानन्द लाई प्रवेश दिएर पढाउन थाल्नु भयो । दयानन्द पनि एस्तो महाविद्वान् गुरु पाएर कृत कृत्य हुनुभयो ।

गुरुवर विरजानन्द दण्डी ज्यू लाई जीवनमा दुईटा सन्ताप ले ज्यादै पिरेको थियो । पराधीन मातृभूमि को दुरवस्था ले र मनुष्यकृत अनार्षग्रन्थ हरु को पठन-पाठन ले ईश्वर, ऋषि-महर्षि र महापुरुष हरु को निन्दाले । शिष्य दयानन्द लाई

पनि दुईटै पीरले ज्यादै सताएको थियो मातृभूमि को पराधीनता र योग्य गुरु नभेटेर अपूर्णअध्ययन, चारैतिर फैलिएको अविद्या, अशिक्षा र दरिद्रता। आज सौभाग्य ले दयानन्द सरस्वती व्याकरण सूर्य प्रज्ञाचक्षु विरजानन्द दण्डी को विद्यालय मा अध्ययन हेतु आईपुग्नुभएको छ । आज इतिहासको उल्लेख्य दिवस हो । ३६ वर्षिय विद्यार्थी स्वामी दयानन्द सरस्वतीले धेरै दिनदेखि खोजेका गुरु आज फेला पर्नुभएको छ ।

लगभग ३ वर्षमा दयानन्द ज्यू को पढाई समाप्त भयो गुरुवर्य विरजानन्द ले आफू भित्र भएको वैदिक वाङ्मय को सम्पूर्ण ज्ञान दयानन्द भित्र जम्मै खन्याईदिनुभयो । दयानन्द ज्यूले पनि पूर्ण पाण्डित्य प्राप्त गरेर गुरुवर को आदेश अनुसार यावज्जीवन सत्य सनातन वैदिकधर्म, संस्कृति र आर्षपरम्परा को पठन पाठन एवं देशको दशा सुधार गर्ने प्रण गर्दै गुरुगृह बाट विदा भईकार्यक्षेत्र मा उत्रिनुभयो ।

युगद्रष्टा स्वामी दयानन्द आफ्ना समयका आचार्य हुनुहुन्थ्यो । एक उत्तम आचार्य का गुणहरु वहाँमा विद्यमान थिए । वहाँले वि.सं. १९३० सालदेखि लेखन कार्य आरम्भ गर्नु भएको हो र देहान्त वर्ष वि.सं. १९४० सम्म जम्मा दश वर्षमा धेरै अमुल्य रचना रत्न हरु लोकार्पण गरेर जानुभयो । अविद्या, अशिक्षा, पाखण्ड, मूर्तिपूजा, नारीजातीको दुरवस्था,जन्मना जातिवाद आदिका विरुद्ध ठूला ठूला शास्त्रार्थ गर्नु भयो ।

वहाँका मुख्य-मुख्य रचना हरु हुन् -

१. पञ्चमहायज्ञ विधि  २. वेदाङ्ग प्रकाश १४ भाग मा
३. आर्याभिविनय  ४. ऋग्वेदादिभाष्य भूमिका
५. सत्यार्थ प्रकाश  ६. यजुर्वेदभाष्यम् (सम्पूर्ण)
७. ऋग्वेदभाष्यम् (सातौं मण्डलको दोस्रो सूक्तको ६३ मन्त्र सम्म)
८. संस्कृत वाक्य प्रबोध  ९. संस्कार विधि

१०. पाखण्ड खण्डन    ११. वेदान्तिध्वान्त निवारण

१२. गोकरुणानिधि    १३. व्यवहार भानु

१४. अद्वैत मत खण्डन   १५. अष्टाध्यायी भाष्य आदि

वहाँले सम्वत् १९३२ (सन् १८७५ ई.) साल मा समाज सुधारक विश्व प्रसिद्ध संस्था आर्यसमाज को स्थापना गर्नु भयो ।

देश, धर्म र सत्य का शत्रु पाखण्डी षड्यन्त्रकारीहरु ईश्वरभक्त, सत्यवादी, वैदिक संस्कृतिका अनन्य सेवक, दिव्यात्मा दयानन्द संग जल्दथे । तिनीहरुले १६ पटक विष दिएर वहाँलाई मार्ने प्रयास गरे तर सोह्रैपटक यौगिक क्रिया द्वारा विष वमन गरी बाँच्न सफल हुनुभयो । तर १७ औं पटक को विष पान बाट बच्न सफल हुनुभएन । एसपाली दूध मा काँच (सिसा) पिंधेर मिसाईयो र तेस मा शंखिया नाम को विष पनि मिलाइयो । स्वामी ज्यू को आफ्नै भान्से जगन्नाथ लाई लोभ-लालच मा फँसाएर राती सुत्ने बेला को दूध मा उक्त विष राखि दूध पिउन दिईयो । तेस का केही क्षणमै स्वामी ज्यू लाई बिसञ्चो भएको थाहा भयो आज उग्रविष दिएछन् भनेर । स्वामी ज्यू एकछिन मात्र निदाउनु भएको थियो अचानक पेटमा भीषण शूल भएपछि निन्द्रा टुट्यो र लगत्तै ३ पटक बान्ता पनि भयो । महर्षि ले आफ्ना दिव्य दृष्टि ले विषदाता जगन्नाथ लाई समाती सक्नुभएको थियो । एकछिन पछि जगन्नाथ लाई शान्त स्वर ले बोलाउनु भयो, त्यो डर ले थरथर काम्दै हात जोड्दै आयो र आफ्नो अपराध स्वीकार गरी सम्पूर्ण कुरा उकेली दियो । स्वामी ज्यू ले गम्भीर भएर “जगन्नाथ ! मैले धेरै काम गर्नु थियो त्यो सबै अपूर्ण रह्यो, तिमीले गर्नु गऱ्यौ भन्दै रु. ५०० निकालेर दया का सागर दयानन्द ले जगन्नाथ लाई दिंदै यो राख तिमी लाई काम आँउछ । तिमी नेपाल तिर तुरुन्त भागेर जाऊ” भन्दै आफ्नो हत्यारा लाई क्षमादान दिई भगाई दिनुभयो । धन्य हो दयानन्द ।

विष पान गरेको ठीक १ महिना पछि वि.सं. १९४० साल

कार्तिक कृष्णपक्ष अमावश्या-दीपावली मंगलबार का दिन साँझ ६ बजे तिर महामानव दयानन्द सरस्वती ईश्वर लाई धन्यावाद दिँदै वेदमन्त्र एवं ओ३म्कार को दीर्घ उच्चारण गर्दै ज्योतिर्मय परमेश्वर को काख मा लवलीन हुनुभयो ।

## स्तुति-प्रार्थना र उपासना

महर्षि दयानन्द सरस्वती ज्यू ईश्वर को स्तुति-प्रार्थना र उपासना मा विशेष बल दिनुहुन्थ्यो । वहाँले स्तुति-प्रार्थना र उपासना को परिभाषा यस प्रकार गर्नुभएको छ –

[१] **स्तुति**- "ईश्वर" अथवा अन्य कुनै पदार्थ को गुण, ज्ञान, कथन, श्रवण र सत्यभाषण गर्नु "स्तुति" कहलाउँछ । स्तुति बाट प्रभु को गुण, कर्म र स्वभाव को ज्ञान भइ प्रभु मा साँचो प्रेम र प्रीति उत्पन्न हुन जान्छ । उसका गुण, कर्म र स्वभाव हरु ले आफ्ना गुण, कर्म र स्वभाव हरु को सुधार हुन्छ । यो स्तुति को फल हो ।

-[आर्योद्देश्यरत्न माला]

स्तुति को अर्को नाम "**नामस्मरण**" पनि हो । एस विषय मा ऋषिवर लेख्नुहुन्छ- जस्तै- ब्रह्म, परमेश्वर, ईश्वर, न्यायकारी, दयालु, सर्वशक्तिमान् आदि नाम परमेश्वर का गुण, कर्म र स्वभाव हरु बाट बनेका हुन् । ब्रह्म =सबैभन्दा ठूलो, परमेश्वर = ईश्वर को पनि ईश्वर, ईश्वर =सामर्थ्य सम्पन्न, न्यायकारी =कहिल्यै पनि अन्याय नगर्ने, दयालु= सबै माथि कृपादृष्टि राख्ने, सर्वशक्तिमान् = आफ्नो सामर्थ्यद्वारा सकल जगत् को उत्पत्ति, स्थिति र प्रलय गर्ने, कसैको सहयोग नलिने, ब्रह्मा =जगत्का विविध पदार्थहरु बनाउने, विष्णु =सबैमा व्यापक भएर रक्षा गर्ने, महादेव=सबै देव हरुका पनि देव, रुद्र = प्रलयकर्ता आदि नाम हरु लाई आफु मा धारण गर्नु अर्थात् ठूला कार्यहरु बाट ठूलो भएर, समर्थहरु मा समर्थ भएर, सामर्थ्यहरु लाई बढाउँदै जानु, अधर्म कहिल्यै नगर्नु, सबै मा दया राख्नु, सबै प्रकारका साधन

हरु लाई समर्थ गर्नु, शिल्पविद्या द्वारा नाना प्रकारका पदार्थ हरु बनाउँनु, सम्पूर्ण संसार मा आफ्नो आत्मा जस्तै सबैको सुख दुःख सम्झनु, सबैको रक्षा गर्नु, विद्वान् हरु मा विद्वान् हुनु, दुष्ट कर्म को प्रलय र दुष्ट कर्म गर्ने हरु लाई प्रयत्न पूर्वक दण्ड दिनु र सज्जन हरु को रक्षा गर्नु । एस प्रकार परमेश्वर का नाम हरु को अर्थ बुझेर परमेश्वर का गुण कर्म र स्वभाव का अनुकूल आफ्ना गुण कर्म र स्वभाव हरु लाई बनाउँदै जानु नै परमेश्वर को **"नामस्मरण"** हो ।

[२] **प्रार्थना**- आफ्नो पूर्ण पुरुषार्थ का उपरान्त उत्तम कर्म को सिद्धि का लागी परमेश्वर अथवा कुनै सामर्थ्यवान् व्यक्ति को सहायता लिइन्छ भने त्यो प्रार्थना कहलाउँछ ।

-[आर्योद्देश्यरत्नमाला]

प्रार्थना गर्नाले अभिमान को नाश, आत्मा मा आर्द्रता, गुण ग्रहण मा पुरुषार्थ र अत्यन्त प्रीति हुनु प्रार्थना को फल हो।

प्रार्थना त्यो चाबी हो जसले स्वर्ग= सुख विशेष को ढोका उग्रिन्छ, प्रार्थना ले जीवन मा निरभिमानता आउँछ, उत्साह उत्पन्न हुन्छ र सहायता को प्राप्ति हुन्छ । जुन कुरा का लागी प्रार्थना गरिन्छ तेस मा पूर्ण पुरुषार्थ गर्नुपर्छ । अन्यथा प्रार्थना पूर्ण हुन सक्तैन ।

प्रार्थना शुभ हुनुपर्दछ । आफ्नो र अर्काको कल्याण का लागी हुनुपर्दछ । एस्तो प्रार्थना कहिल्यै गर्नुहुन्न "हे परमेश्वर ! तपाईंले मेरा शत्रु हरु लाई नाश गरिदिनुहोस्, मलाई सबैभन्दा ठूलो बनाईदिनु होस् र मेरो सर्बत्र प्रतिष्ठा होस् ।" आलस्य वा अल्छीपन लाई छेउ पनि पर्न दिनुहुँदैन , परमेश्वर ले यो पुरुषार्थ गर्ने आज्ञा दिनुभएको छ । तेसलाई जसले पनि तोड्दछ तेस ले कहिल्यै पनि सुख पाउँदैन ।

-[सत्यार्थप्रकाश सातौं समुल्लास]

प्रार्थना ले मन का विकार नाश हुन्छन् । मन मा शुभ संकल्प हरु एस प्रकार प्रविष्ट हुन्छन् जसरी चुम्बक मा फलाम । प्रार्थना पछि साधक उपासना तिर अग्रसर हुन्छ ।

[३] **उपासना**- उपासना को शब्दार्थ हो – उप=नगिच आसना=बस्नु उपस्थित हुनु अर्थात् परमात्मा का नगिच बस्नु जो व्यक्ति उपासना गर्न चाहन्छन् तिनले कसैसंग वैरभाव राख्न हुदैन, सर्वदा सबैसंग प्रीति गर्नु, सत्य व्यवहार गर्नु जितेन्द्रिय हुनु, लम्पट नहुनु र निरभिमानी भई अभिमान काहिल्यै नगर्नु । राग, द्वेष छोडेर भित्र पवित्र हुनु र पानी आदि द्वारा बाहिर पवित्र रहनु । धर्मपूर्वक पुरुषार्थ गर्दा न लाभ मा प्रसन्नता देखाउनु र न हानी मा अप्रसन्नता प्रकट गर्नु । प्रसन्न भएर आल्यस्य त्याग गरी सदा पुरुषार्थ गर्ने गर्नुपर्दछ । सदा दुःख-सुख को सहन र धर्म को अनुष्ठान गर्नु अधर्म को नगर्नु, सर्वदा सत्यशास्त्र हरु को अध्ययन र अध्यापन गर्नु गराउँनु, सत्पुरुष हरु को संगति गर्नु र “ओङ्कार” यो परमात्मा को नाम को अर्थ विचार गर्दै नित्य प्रति जप गर्ने गर्नु र आफ्नो आत्मा लाई परमात्मा को आज्ञा का अनुकूल समर्पित गरिदिनु ।

जब उपासना गर्ने इच्छा हुन्छ एकान्त शान्त-शुद्ध स्थान मा गएर आसन लगाई प्राणायाम गर्नु, बाह्य विषय हरु बाट इन्द्रिय हरु लाई रोकि मन लाई नाभि प्रदेश मा वा हृदय-कण्ठ-आँखा-शिखा अथवा पिठूयूँ को माझ हाड मा कुनै स्थान मा स्थिर गर्नु, आफ्नो आत्मा र परमात्मा को विवेचन गरी परमात्मा मा निमग्न भएर संयमी हुनु । एस प्रकार आत्मा र अन्तःकरण पवित्र भएर सत्यले परिपूर्ण हुन जान्छन् । नित्य प्रति ज्ञान-विज्ञान बढाएर मुक्ति सम्म पुग्दछ ।

-[सत्यार्थप्रकाश सप्तम समुल्लास]

## सगुण र निर्गुण उपासना

महर्षि दयानन्द **सगुण** र **निर्गुण** को पनि सहज र सरल परिभाषा गर्नु हुन्छ–सर्वज्ञ , सर्वशक्तिमान, शुद्ध, नित्य, आनन्द, सर्वव्यापक, एक, सनातन, सर्वकर्ता, सर्वाधार, सर्वस्वामी, सर्वनियन्ता, सर्वान्तर्यामी, मङ्गलमय, सर्वानन्दप्रद, सर्वपिता, सम्पूर्ण जगत् का रचयिता, न्यायकारी, दयालु आदि सत्यगुण हरु ले युक्त जुन ईश्वर को उपासना गरिन्छ त्यो नै **सगुणोपासना** हो ।

**निर्गुणोपासना-** शब्द, स्पर्श, रूप, रस, गन्ध, संयोग , वियोग , हलुंगो, गह्रूंगो, अविद्या, जन्म, मृत्यु र दुः ख आदि गुण देखि रहित परमात्मा लाई जानेर उसैको उपासना गर्नु **निर्गुणोपासना** हो ।

-[सत्यार्थ प्रकाश सप्तम समुल्लास]

अन्तमा महर्षिवर को एस आर्याभिविनय ले जनता मा ईश्वर को वास्तविक स्तुति-प्रार्थना उपासना को यथार्थ स्वरुप को बोध गराउनेछ । वेद र वैदिक स्तुति-प्रार्थना उपासना को रहस्य हृदयंगम गरी जीवन सफल हुनेछ भन्ने आशा का साथ ऋषि दयानन्द को यो कृति नेपाली राष्ट्रभाषा मा प्रस्तुत गरीएको छ । एसमा भाषागत धेरै त्रुटीहरु हुन गएका छन् । सुधी पाठक वर्गले मेरा भूल हरु लाई औंल्याइदिनुहुनेछ । एसको प्रकाशन मा ............................................................... ले सहयोग गर्नुभएको हो । वहाँलाई साभार धन्यबाद व्यक्त गर्दछु । अक्षर संयोजन मा श्री सन्तोष मान श्रेष्ठ ज्यू को सहयोग रहेको छ वहाँलाई पनि धन्यवाद ज्ञापन गर्दछु साथै आवरणमा पनि श्री सन्तोष मान ज्यू ले नै सहयोग गर्नु भएको छ । पुनश्चय .............. वहाँलाई धन्यवाद ज्ञापन गर्दछु ।

काठमाण्डौ | विद्वज्जन सेवक
माघेसक्रान्ति २०७३ | कमलाकान्त आत्रेय

# ॥ओ३म्॥
# अथार्याभिविनयोपक्रमणिका विचारः

सर्वात्मा सच्चिदानन्दो ऽ नन्तो यो न्यायकृच्छुचिः ।
भूयात्तमां सहायो नो दयालुः सर्वशक्तिमान् ॥१॥

व्याख्यान- परमात्मा सबैको आत्मा, सत्-चित्-आनन्दस्वरूप, अनन्त, अज, न्यायकारी, निर्मल, सदा पवित्र, दयालु, सम्पूर्ण सामर्थ्य हरु ले युक्त हाम्रो इष्टदेव हो, उसले हामीलाई सधैं सहारा देओस्, जसले गर्दा महाकठिन काम पनि हामी सहजै संग गर्न समर्थ हौं । हे कृपानिधे ! यो हाम्रो काम सिद्ध गर्ने तपाईं नै हुनुहुन्छ, हामी आशा गर्दछौं कि तपाईंले हाम्रो कामना अवश्य सिद्ध गर्नु हुनेछ । ॥१॥

चक्षूरामाङ्कचन्द्रेऽब्दे चैत्रे मासि सिते दले ।
दशम्यां गुरुवारेऽयं ग्रन्थारम्भः कृतो मया ॥२॥

मिति सम्वत् १९३२ साल चैत शुक्लपक्ष १० तिथि बिहीवार का दिन मैले यो ग्रन्थ लेख्न आरम्भ गरें ॥२॥

दयाया आनन्दो विलसति परः स्वात्मविदितः,
सरस्वत्यस्याग्रे निवसति मुदा सत्यनिलया ।
इयं ख्यातिर्यस्य प्रलसितगुणा वेदशरणा
स्त्यनेनायं ग्रन्थो रचित इति बोधव्यमनघाः ॥३॥

स्वामी दयानन्द सरस्वती को नाम यो तेस्रो श्लोक बाट निक्लिछ[1] ॥१॥

बहुभिः प्रार्थितः सम्यग् ग्रन्थारम्भः कृतोऽधुना ।
हिताय सर्वलोकानां ज्ञानाय परमात्मनः ॥४॥

---

१. एही श्लोक केही पाठभेद ले ऋग्वेदादिभाष्यभूमिका मा पनि छ । त्यहाँ एसको अर्थ एसप्रकार दिएको छ -"सबै सज्जन हरु लाई यो कुरा विदित होस् कि-जसको नाम स्वामी दयानन्द सरस्वती हो, वहाँ ले नै एसलाई रचेको हो ।"

विद्वान् एवं विचारशील व्यक्ति हरु ले मँसंग प्रीति पूर्वक अनुरोध गरेको हुदाँ मैले सबैको हित र परमेश्वर को यथार्थ ज्ञान तथा यथावत प्रेम-भक्ति होओस् भन्ने हेतु ले यो ग्रन्थ लेख्न आरम्भ गरेको हूँ ॥४॥

वेदस्य मूलमन्त्राणां व्याख्यानं लोकभाषया ।
क्रियते सुखबोधाय ब्रह्मज्ञानाय सम्प्रति ॥५॥

एस ग्रन्थ मा मात्र चार वेद का र ब्राह्मण ग्रन्थ हरु का मूल मन्त्र हरु को प्राकृत भाषा मा व्याख्यान गरेको छ, जसले सबै मानिस हरु लाई बोध हुनेछ र ब्रह्म को यथार्थ ज्ञान हुनेछ ॥५॥

स्तुत्युपासनयोः सम्यक् प्रार्थनायाश्च वर्णितः ।
विषयो वेदमन्त्रैश्च सर्वेषां सुखवर्द्धनः ॥६॥

एस ग्रन्थ मा वेद मन्त्र हरु द्वारा सबै प्रकार का सुख हरु बढाउने, परमेश्वर को स्तुति, प्रार्थना र उपासना तथा धर्मादि विषय को वर्णन गरिएको छ ॥६॥

विमलं सुखदं सततं सुहितं
जगति प्रततं तदु वेदगतम् ।
मनसि प्रकटं यदि यस्य सुखी
स नरोऽस्ति सदेश्वरभागधिकः ॥७॥

जुन ब्रह्म विमल, सुखकारक, पूर्णकाम, तृप्त र जगत्मा व्याप्त छ, तेही वेद हरु बाट प्राप्य छ जसको मन मा एस प्रकार को प्रकटता [यथार्थ विज्ञान] छ, तेही मानिस ईश्वर का आनन्द को भागी हो र तेही सदैव सबैभन्दा धेर सुखी हो । एस्तो मानिस धन्य हो ॥७॥

विशेषभागीह वृणोति यो हितं
नरः परात्मानमतीव मानतः।
अशेषदुःखात्तु विमुच्य विद्यया
स मोक्षमाप्नोति न कामकामुक ः॥८॥

जुन मानिस एस संसार मा अत्यन्त प्रेम, धर्मात्मता, विद्या, सत्संग, सुविचारता, जितेन्द्रियता, प्रत्यक्षादि प्रमाण हरु द्वारा परमात्मा लाई स्वीकार गर्दछ, तेही मानिस अतीव भाग्याशाली हो, किनकि त्यो मानिस यथार्थ सत्य विद्या ले सम्पूर्ण भएर दुःख हरु बाट छुटी परमानन्द परमात्मा प्राप्तिरूप जुन मोक्ष छ तेसलाई प्राप्त गर्दछ र दुःख सागर बाट छुट्न जान्छ, परन्तु जुन विषय लम्पट, विचार रहित, विद्या, धर्म, जितेन्द्रियता, सत्संगरहित, छल, कपट, अभिमान र दुराग्रह आदि दुष्टतायुक्त छ, त्यो मोक्ष सुख मा प्राप्त हुन सक्तैन, किनभने त्यो ईश्वर भक्तिले विमुख जन्म मरण, ज्वरादि पीडा हरु बाट पीडित भएर सदा दुःख सागर मा नै परी रहन्छ ॥८॥

एस कारण ले सबै मानिस हरु लाई उचित छ परमेश्वर र उसको आज्ञा विरुद्ध कहिल्यै पनि नहुनु, किन्तु उसको आज्ञा मा तत्पर भएर इहलोक [संसार व्यवहार] तथा परलोक [पूर्वोक्त मोक्ष] लाई यथावत् सिद्धि गर्नु एही मानिस हरु को कृतकृत्यता हो।

एस आर्याभिविनय ग्रन्थ मा मुख्यतया वेद मन्त्र हरु को परमेश्वर सम्बन्धी केवल एक मात्र अर्थ संक्षेप ले गरिएको छ। परलोक र व्यवहार-सम्बन्धी दुईटै अर्थ गर्दा ग्रन्थ धेरै बढ्न जाने थियो एस कारण व्यवहार विद्यासम्बन्धि अर्थ गरिएन परन्तु वेदभाष्य गर्दा चाँहिँ यथावत् विस्तार पूर्वक परमार्थ र व्यवहारार्थ ई दुईटै अर्थ स-प्रमाण गरिने छ, जस्तै-

१. तदेवाग्निस्तदादित्यस्तद्वायुः [यजुः३२।१॥] इत्यादि यजुर्वेद संहिता प्रमाण।
२. इन्द्रंमित्रं वरुणम् [ऋग् १।१६४।४६॥] इत्यादि ऋग्वेद संहिता प्रमाण।
३. ब्रह्म वै बृहस्पति ः॥ ऐत. १।१३॥

४. गणपतिर्वै ब्रह्म ॥ शत. १।३।४।१५॥
५. प्राणो वै ब्रह्म ॥ शत १४।६।१०।२॥
६. आपो वै ब्रह्म ॥ ब्रह्म हयग्नि : ॥ शत १।५।१।११॥
७. महान्त मेवात्मानम् ॥ निरुक्त १४।१॥

इत्यादि वेद, शतपथ, ऐतरेय ब्राह्मणादि प्रमाण र निरुक्तादि प्रमाण हरु ले परब्रह्म नै अर्थ लिइन्छ। तथा 'मुखादग्निरजायत' यजुः ३१।१२॥ इत्यादि यजुर्वेद संहिता प्रमाण, वायोरग्निः इत्यादि [तैत्ति० उप० ब्रह्म० अनु० ३।१॥] ब्राह्मण प्रमाण तथा अग्निरग्रणीर्मवती [निरुक्त ७।१४॥] इत्यादि निरुक्त प्रमाण हरु ले यो प्रत्यक्ष जुन रूप गुणवान् दाह प्रकाशयुक्त भौतिक अग्नि, त्यो लिइन्छ। इत्यादि दृढ प्रमाण युक्ति र प्रत्यक्ष व्यवहार बाट दुवै अर्थ वेद भाष्य मा लेखिने छन्। जसले सायणादि कृत भाष्य-दोष अरू उसकै अनुसार अंग्रेज हरु ले गरेको अर्थ दोषरूप वेद हरु माथि को कलंक निवृत्त हुन जाने छ। अरू वेद हरु को सत्यार्थ प्रकाशित हुनाले, वेद हरु को महत्व तथा वेद को अनन्तार्थ जानानाले मानिस हरु लाई महान् लाभ र वेद माथि यथावत् प्रीति हुनेछ।

एस ग्रन्थ बाट त मानिस हरु लाई केवल ईश्वर को स्वरूपज्ञान र भक्ति, धर्मनिष्ठा, व्यवहाशुद्धि इत्यादि प्रयोजनसिद्ध हुनेछ। जसले नास्तिक र पाखण्डमतादि अधर्म मा मानिस हरु न फँसून्, किञ्च सबैप्रकार ले मानिस हरु अत्युत्तम हुन् अरू सर्वशक्तिमान् जगदीश्वर को सबैमाथि कृपा होस् जसले गर्दा सबै मानिस ले दुष्टता लाई छोडेर श्रेष्ठता लाई स्वीकार गरून् भन्ने यो मेरो परमात्मा संग प्रार्थना छ, परमेश्वर ले अवश्य पूर्ण गर्ने छ।

इत्युपक्रमणिका संक्षेपतः सम्पूर्णा ॥



॥ ओ३म् ॥

तत् सत् परब्रह्मणे नमः ॥

# अथार्य्याभिविनयः प्रारम्भ : ॥

ओं शं नो मित्रः शं वरुणः शं नो भवत्वर्य्यमा ॥
शं न इन्द्रो बृहस्पतिः शं नो विष्णुरुरुक्रमः ॥१॥

- ऋ० अष्टक १ । अ० ६। व० १८। म० ९ ॥ १

व्याख्यान-हे सच्चिचदानन्दानन्तस्वरूप ! हे नित्यशुद्धबुद्धमुक्तस्वभाव, हे अद्वितीयानुपमजगदादिकारण ! हे अज, निराकार, सर्वशक्तिमन्, न्यायकारिन् ! हे जगदीश, सर्वजगदुत्पादकाधार ! हे सनातन, सर्वमङ्गलयम, सर्वस्वामिन् ! हे करुणाकरास्मत्पितः, परमसहायक! हे सर्वानन्दप्रद, सकलदुःखविनाशक ! हे अविद्यान्धकारनिर्मूलक विद्यार्कप्रकाशक ! हे परमैश्वर्यदायक, साम्राज्य-प्रसारक, ! हे अधमोद्धारक, पतितपावन, मान्यप्रद ! हे विश्वविनोदक, विनयविधिप्रद्र, हे विश्वासविलासक, हे निरञ्जन, नायक, शर्मद, नरेश, निर्विकार ! हे सर्वान्तर्यामिन्, सदुपदेशक, मोक्षप्रद ! हे सत्यगुणाकर, निर्मल, निरीह, निरामय, निरुपद्रव, दीनदयाकर, परमसुखदायक ! हे दारिद्र्यविनाशक, निर्वैरविधायक, सुनीतिवर्धक ! हे प्रीतिसाधक, राज्यविधायक, शत्रुविनाशक ! हे सर्वबलदायक, निर्बलपालक ! हे धर्मसुप्रापक ! हे अर्थसुसाधक, सुकामवर्द्धक, ज्ञानप्रद ! हे सन्तति पालक, धर्म्मसुशिक्षक, रोगविनाशक, हे पुरुषार्थ प्रापक, दुर्गुणनाशक, सिद्धिप्रद ! हे सज्जनसुखद दुष्टसुताडन, गर्वकुक्रोध-कुलोभविदारक ! हे परमेश, परेश, परमात्मन्, परब्रह्मन् ! हे जगदानन्दक, परमेश्वर, व्यापक, सूक्ष्माच्छेद्य ! हे अजरामृताभय-निर्बन्धानादे ! हे अप्रतिमप्रभाव, निर्गुणातुल, विश्वाद्य, विश्ववन्द्य, विद्वद्विलासक, इत्याद्यनन्त विशेषणवाच्य ! हे मंगलप्रदेश्वर ! शंनो मित्रः– तपाईं सर्वथा सबैका

---

यो संख्या एस भाग मा सर्वत्र यथावत् जानुन पर्छ, किनभने अगाडि केवल अङ्क संख्या लेखिने छ। ऋ ०१/ ६ /१८/ ९ एस बाट अष्टक, अध्याय, वर्ग र मन्त्र बुझ्नु पर्छ। [मण्डलक्रमानुसार मण्डल १। सूक्त ९०। मन्त्र ९॥]

- महर्षि दयानन्द सरस्वती

निश्चित् मित्र हुनुहुन्छ, हामीलाई सर्वदा सत्य सुखदायक हुनुहोस् शं वरुणः – हे सर्वोत्कृष्ट स्वीकरणीय वरेश्वर ! तपाईं वरुण अर्थात् सबैभन्दा परमोत्तम हुनुहुन्छ, अतः तपाईं हामी हरु लाई परमसुखदायक हुनुहोस्। शंनो भवत्वर्यमा – हे पक्षपात रहित धर्मन्यायकारिन ! तपाईं अर्यमा - यमराज हुनुहुन्छ, एसर्थ हाम्रा लागी न्याययुक्त सुख दिने तपाई नै हो । शं नः इन्द्रः – हे परमैश्वर्य वन् इन्द्रेश्वर ! तपाईंले हामीलाई चाँडै परमैश्वरर्य युक्त स्थिर सुख दिनुहोस् । हे महाविद्यावाचोधिपते बृहस्पतिः–बृहस्पते परमात्मन् ! हामीलाई बृहत्= सबैभन्दा ठूलो सुख दिने तपाईं नै हुनहुन्छ । शं नः विष्णुः उरुक्रमः–हे सर्व व्यापाक अनन्त पराक्रमेश्वर विष्णो ! हामीलाई अनन्त सुःख दिनु होस् हामी जे पनि माग्द छौं त्यो तपाई संग मात्रै माग्द छौं, सबै प्रकार को सुःख दिने तपाईं बिना अर्को कोही छैन । हामीलाई सर्वथा तपाईं कै आश्रय छ, अन्य कसैको छैन। किनभने सर्व शक्तिमान्, न्यायकारीर दयामय सबै भन्दा महान् पिता लाई छोडेर किन तल्लो स्थान मा अवस्थित कसैको आश्रय लिने । हजुरको त स्वभावै छ कि अङ्गिकृत लाई कहिल्यै पनि परित्याग गर्नु हुन्न, अतः हजुरले हामीलाई सदैब सुख मात्रै प्रदान गर्नु हुने छ, यो हामीलाई दृढ निश्चय छ ॥१॥

## स्तुतिविषयः

अ॒ग्निमी॑ळे पु॒रोहि॑तं य॒ज्ञस्य॑ दे॒वमृ॒त्विज॑म् ।
होता॑रं रत्न॒धात॑मम् ॥२॥

- ऋ० १.१.१.१.

व्याख्यान – हे वन्द्येश्वराग्ने ! तपाईं अग्निमीळे– ज्ञानस्वरूप हुन हुन्छ, तपाईं को म स्तुति गर्द छु । हे सर्व हितोपकारक ! पुरोहितम् = समस्त जगत् को हित साधक हुन् हुन्छ। यज्ञस्य देवम् – हे यज्ञदेव ! हजुर सम्पूर्ण मानिस हरु का पूज्यतम र ज्ञान यज्ञादि का लागी कमनीयतम हुनुहुन्छ। ऋत्विजम्– वसन्त आदि सबै ऋतु हरु का रचयिता अर्थात्-जुन बेला जस्तो सुख चाहिन्छ तेस बेला तेस्तै सुख का

सम्पादक तपाईं नै हुनुहुन्छ । होतारम्– सम्पूर्ण जगत् लाई समस्त योग र क्षेम का दाता हुनुहुन्छ, तथा प्रलय बेला मा अखिल जगत् लाई कारण मा होम कर्ता तपाईं नै हुनुहुन्छ । रत्नधातमम्– रत्न अर्थात् रमणीय पृथिव्यादि हरु का रचयिता र धारण कर्ता एक मात्र तपाईं नै हुनुहुन्छ तथा आफ्ना सेवक हरु लाई पनि रत्न हरु धारण गराउने तपाईं नै हुनुहुन्छ। हे सर्वशक्तिमन् परमात्मन् ! एस कारण मँ बारम्बार तपाईंको स्तुति गर्दछु, एसलाई तपाईंले स्वीकार गर्नु होस् । जसले गर्दा हामी हरु सबै हजुर का कृपा पात्र भएर सदैब आनन्द मा रहौं ॥२॥

सबै मानिस हरु प्रति परमात्मा को यो उपदेश छ - हे मानिस हरु हो ! तिमीहरु ले एसै प्रकार ले मेरो प्रार्थना र उपासनादि गर्नु । जसरी पिता वा गुरु ले आफ्नो छोरा वा शिष्य लाई सिकाउँदछ कि तिमी पिता वा गुरु का विषय मा एसै गरी स्तुति आदि को व्यवहार गर्नु एसै गरी समस्त जगत् का पिता एवं परमगुरु ईश्वर ले हामीलाई कृपा गरी सबै व्यवहार र विद्यादि पदार्थ हरु को उपदेश गर्नु भएको छ, जसले हामीलाई व्यवहार ज्ञान र परमार्थ ज्ञान भएर अत्यन्त सुख होस् तेसै गरी परमविद्या 'वेद' को पनि आदि कारण ईश्वर नै हो ॥२॥

## प्रार्थनाविषयः

अग्निना॑ र॒यिम॑श्नव॒त्पोष॑मे॒व दि॒वेदि॑वे
य॒शसं॑ वी॒रव॑त्तमम् ॥३॥

- ऋ० १।१।१।३

व्याख्यान – अग्निना = हे महादातः ईश्वराग्ने ! तपाईंका कृपा ले स्तुति गर्ने मानिस ले रयिम्= त्यो विद्यादि धन र सुवर्णादि धन अश्नवत्= अवश्य प्राप्त गर्दछ जुन धन दिवेदिवे= प्रतिदिन पोषमेव= महापुष्टि गर्ने र यशसम्=सत्कीर्ति बढाउने हुन्छ तथा जसले वीरवत्तमम्=विद्या, शौर्य, धैर्य, चातुर्य, बल, पराक्रमयुक्त र दृढाङ्ग, धर्मात्मा, न्यायप्रेमी र अत्यन्त वीर पुरुष प्राप्त हुन्छन्, तेसै गरी मँ लाई पनि सुवर्ण रत्नादि

तथा चक्रवर्ती राज्य र विज्ञानरूप धन प्राप्त हुन् तथा तपाईंका कृपा ले सदैव धर्मात्मा भई अत्यन्त सुखी भएर रहूँ ॥३॥

## स्तुतिविषयः

अग्निः पूर्वेभिर्ऋषिभिरीड्यो नूतनैरुत ।
स देवाँ एह वक्षति ॥४॥

- ऋ० १.१.१.२

व्याख्यान = अग्निः = हे सबै मानिस हरु ले स्तुति गर्न योग्य ईश्वराग्ने ! पूर्वेभिः = विद्याध्ययन गरेका प्राचीन ऋषिभिः = मन्त्रार्थ देख्ने विद्वान् हरु र नूतनैः=वेदार्थ अध्ययन गर्ने नवीन ब्रह्मचारी हरु द्वारा ईड्यः= स्तुति गर्न योग्य उत = अरू जुन हामी हरु मनुष्य, विद्वान्, अथवा अपठित मूर्ख ले पनि अवश्य तपाईं नै स्तुति गर्न योग्य हुनुहुन्छ, अतः स्तुति ग्रहण गर्नु हुने सः= तपाईं हाम्रा लागी र सम्पूर्ण संसार को सुख का लागी देवान्= कृपा गरी दिव्य गुण अर्थात् विद्या आदि लाई कृपा गरेर एह वक्षति = प्राप्त गराउनु होस्, तपाईं नै सबैका इष्टदेव हुनुहुन्छ ॥४॥

## स्तुतिविषयः

अग्निर्होता कविक्रतुः सत्यश्चित्रश्रवस्तमः ।
देवो देवेभिरा गमत् ॥५॥

- ऋ० १.१.१.५

व्याख्यान– हे सर्वदृक् ! सबैलाई देख्नु हुने होताः कविः = समस्त शुभगुण हरु र चक्रवर्ती राज्यादि दिने र सर्वज्ञ क्रतुः=सम्पूर्ण जगत् का जनक सत्यः= अविनाशी अर्थात् जसको कहिल्यै नाश हुँदैन चित्रश्रवस्तमः= आश्चर्यश्रवणादि, आश्चर्यगुण, आश्चर्यशक्ति, आश्चर्यरूपवान् र तपाईं अत्यन्त उत्तम् हुनुहुन्छ, तपाईंका तुल्य वा तापईं भन्दा ठूलो कोही छैन । देवः= हे गजदीश ! देवेभिः= दिव्यगुण हरु का साथ वर्तमान आगमत्= हाम्रा हृदय मा तपाईं प्रकट

हुनुहोस् र सम्पूर्ण जगत् मा पनि प्रकाशित हुनुहोस्, जसले हामी र हाम्रो राज्य दिव्यगुण ले सुशोभित हौस्। यो राज्य तपाईंकै हो, हामी ता केवल तपाईंका पुत्र तथा भृत्यवत् हौं ॥५॥

## प्रार्थनाविषयः

यदङ्ग दाशुषे त्वमग्ने भद्रं करिष्यसि।
तवेत्तत् सत्यमङ्गिर : ॥६॥

- ऋ० १.१.२.१

व्याख्यान– हे अङ्ग = मित्र ! यत् = जुन व्यक्ति ले तपाईंलाई दाशुषे= आत्मा आदि दान गर्दछ, तेसलाई भद्रम्=व्यवहारिक तथा पारमार्थिक सुख अवश्य दिनु हुन्छ। अङ्गिरः = हे प्राण प्रिय ! तव एतत् सत्यम्= स्व भक्तजन लाई परमानन्द दिनु यो तपाईंको सत्यव्रत हो, तपाईंको एही स्वभाव मँ लाई अत्यन्त सुखकारक छ, तपाईंले मँलाई ऐहिक र पारमार्थिक ई दुवै सुख हरु चाँडै दान दिनुहोस्, जसले सबै दुःख पर हटून् र यहाँ सदा सुख छाई रहोस् ॥६॥

## स्तुतिविषयः

वायवा याहि दर्शतेमे सोमा अरङ्कृताः।
तेषां पाहि श्रुधी हवम् ॥७॥

- ऋ० १.१.३.१

व्याख्यान– हे वायो= अनन्तबल परेश, वायो ! दर्शत आयाहि= दर्शनीय ! तपाईं आफ्नो कृपा ले नै हामीलाई प्राप्त हुनुहोस् । इमे सोमाः= हामीले आफ्नो अल्प शक्ति ले सोम [सोमवल्ल्यादि] औषधि हरु को उत्तम रस सम्पादन गरेका छौं अरू हाम्रा जुन सुकै पनि श्रेष्ठ पदार्थ छन्, ती तपाईंका लागी अरङ्कृताः = अलंकृत, अर्थात् उत्तम रीतले हामी ले बनाएका छौं र ती सबै हजुरलाई समर्पण गरेका छौं तेषां पाहि=तिनलाई हजुर ले स्वीकार गर्नु होस् = पूर्णरूपले

स्वीकार गर्नु होस् । श्रुधीहवम् = हामी दीनहरुको पुकार सुनेर, जस्तै पितालाई पुत्रले सानो चीज समर्पण गर्दछ, तेसमा पिता अत्यन्त प्रसन्न हुन्छ, तेसै गरी हजुर हामी माथि प्रसन्न हुनुहोस् ॥७॥

## प्रार्थनाविषयः

पावका नः सरस्वती वाजेभिर्वाजिनीवती ।
यज्ञं वष्टु धिया वसु : ॥८॥

- ऋ० १.१.६.१०

व्याख्यान– हे वाक्पते ! सर्वविद्यामय ! हजुरको कृपाले नः= हामीलाई सरस्वती=सर्वशास्त्रविज्ञानयुक्त वाणी प्राप्तहोस् वाजेभिः= तथा उत्कृष्ट अन्नादि का साथ वर्त्तमान वाजिनीवती= सर्वोत्तम क्रियाविज्ञानयुक्त पावका= पवित्रस्वरूप र पवित्र गर्ने सत्यभाषणमय मङ्गलकारक वाणी तपाईंका प्रेरणा ले प्राप्त भएर तपाईंका अनुग्रह ले धियावसुः= परमोत्तम बुद्धि का साथ वर्तमान निधिस्वरूप यो वाणी यज्ञं वष्टु= सर्वशास्त्रबोध र पूजनीयतम तपाईं का विज्ञान को सदैव कामनायुक्त होस्, जसले गर्दा हाम्रो सम्पूर्ण मूखर्ता नष्ट होस् र हामी महापाण्डित्ययुक्त हौं ॥८॥

## स्तुतिविषयः

पुरूतमं पुरूणामीशानं वार्य्याणाम् ।
इन्द्रं सोमे सचा सुते ॥९॥

- ऋ० १.१.९.२

व्याख्यान– हे परात्पर परमात्मन् ! तपाईं पुरूतमम्= अत्यन्त उत्तम र सर्वशत्रुविनाशक हुनुहुन्छ तथा बहुविध जगत् का पदार्थ हरु का ईशानम्= स्वामी र उत्पादक हुनुहुन्छ, वार्याणाम्=, वर, वरणीय एवं परमानन्दमोक्षादि पदार्थ हरु का पनि ईशान हुनुहुन्छ तथा सोमे= उत्पत्तिस्थान संसार तपाईंबाट सुते= उत्पन्न भएको हुनाले सचा=प्रीति पूर्वक इन्द्रम्= परमैश्वर्यवान् हजुरलाई [अभिप्रगायत] हृदय मा अत्यन्त प्रेम ले गाऊँ, [यथावत्] स्तुति गरौं जसले तपाईंको कृपा बाट हामी हरु को पनि परमैश्वर्य बढ्दै जाओस् र हामी परमानन्द मा प्राप्त हौं ॥९॥

## प्रार्थनाविषयः

तमीशा॑नं जग॑तस्त॒स्थुष॒स्पतिं॑ धियं जि॒न्वमव॑से हूमहे
व॒यम् । पू॒षा नो॒ यथा॒ वेद॑सा॒मस॑द्वृधे र॑क्षि॒ता
पा॒युरद॑ब्धः स्व॒स्तये॑ ॥१०॥

- ऋ० १.६.१५.५

व्याख्यान– हे सर्वाधिस्वामिन् ! हजुर नै चराचर, जगत् को ईशानम्=रचनाकार हुनुहुन्छ,धियंजिन्वम्=सर्वविद्यामय,विज्ञानस्वरूप बुद्धिलाई प्रकाशित गर्ने, सबैलाई तृप्त गर्ने प्रीणनीयस्वरूप पूषा = सबैका पोषक हुनुहुन्छ, एस्तो तपाईंका हामी नः अवसे = आफ्नो रक्षा का लागी हूमहे = आह्वान् गर्दछौं । यथा जुनप्रकार ले हजुर हाम्रो विद्यादिधन हरु को वृद्धि वा रक्षा का लागी अदब्धः रक्षित = निरालस्प रही रक्षा गर्नमा तत्पर हुनुहुन्छ, तेसै गरी हजुरले कृपा गरेर स्वस्तये = हाम्रो सुस्वास्थ्य का लागी पायु : = निरन्तर रक्षक [विनाशनिवारक] हुनुहोस्, हजुरद्वारा पालित हामीहरु सदैव असल काम गरेर उन्नति र आनन्द मा प्राप्त हौं ॥१०॥

## स्तुतिविषय :

अतो॑ दे॒वा अ॑वन्तु नो॒ यतो॒ विष्णु॑र्विचक्र॒मे ।
पृ॒थि॒व्याः स॒प्त धाम॑भिः ॥११॥

- ऋ० १.२.७.१६

व्याख्यान-हे देवाः = विद्वान्वर्ग ! विष्णु= सर्वत्र व्यापक परमेश्वर ले समस्त जीव हरु लाई पाप तथा पुण्य को फल भोग्न र सम्पूर्ण पदार्थ हरु मा पृथिवी देखी लिएर सप्त= सप्तविध अर्थात्= सातप्रकार का धामभिः = धाम अर्थात् अग्ला होचा सात प्रकार का लोक हरु लाई बनाउनु भयो तथा गायत्र्यादि सात छन्द हरु ले विस्तृत विद्यायुक्त वेद पनि बनाउनु भयो, ती लोक हरु मा वर्तमान व्यापक ईश्वर ले यतः = जुन सामर्थ्यद्वारा सबै लोक हरु लाई रचनु भएको

छ। अतः सामर्थ्यात्=तेसै सामर्थ्य ले हाम्रो रक्षा गरून्। हे विद्वज्जन! तपाईं हरु ले पनि उसै विष्णु को उपदेश द्वारा हाम्रो रक्षा गर्नु होस्। कस्तो छ तो विष्णु ? जसले यो सबै जगत्लाई विचक्रमे = विविध प्रकारले रचेको छ, तेसैको नित्य भक्ति गर ॥११॥

## प्रार्थनाविषयः

पाहि नो अग्ने रक्षसः पाहि धूर्तेरराव्णः।
पाहि रीषत उत वा जिघांसतो बृहद्भानो यविष्ठ्य ॥१२॥

- ऋ० १.३.१०.१५

व्याख्यान – अग्ने = हे सर्वशत्रुदाहकाग्ने परमेश्वर ! रक्षसः= राक्षस, हिंसाशील, दुष्टस्वभाव देहधारी हरु बाट नः = हाम्रो पाहि = पालन र रक्षा गर्नुहोस् ! धूर्तेरराव्णः = कृपणी र जुन धूर्त छन् एस्ता मानिसहरु बाट पनि पाहि =हाम्रो रक्षा गर्नु होस्। रीषतः उत वा जिघां सतः=जो हामीलाई मार्न उद्यत् हुन्छ तथा मारिने इच्छा गर्दछ, बृहद्भानो यविष्ठ्य= हे महातेज, बलवत्तम ! ती सबैबाट हाम्रो पाहि = रक्षा गर्नु होस् ॥१२॥

## स्तुतिविषयः

त्वमस्य पारे रजसो व्योमनः स्वभूत्योजा अवसे
धृषन्मन :। चकृषे भूमिं प्रतिमानमोजसोऽपः
स्वः परिभूरेष्या दिवम् ॥१३॥

- ऋ० १.४.१४.१२

व्याख्यान – हे परमैश्वर्यवन् परमात्मन् ! अस्य व्योमनः पारे= एस आकाशलोक भन्दा पारी तथा एसभित्र स्वभूत्योजा= आफ्नो ऐश्वर्य र बल ले विराजमान भएर मनः धृषन् = दुष्टजन हरु को मन लाई धर्षण अर्थात् तिरस्कार गर्दै रजस्= सम्पूर्ण जगत् र विशेष रूप ले हामीहरुको अवसे= सम्यक् रक्षण का लागी त्वम्= तपाईं सावधान हुनु भइरहेको

छ, एसकारण ले गर्दा हामी हरु निर्भय भएर आनन्द गरी रहेछौं, किञ्च दिवम्= परमाकाश, भूमिम्= भूमि तथा स्वः – सुख विशेष मध्यस्थ लोक ई सबै लाई ओजसः= आफ्नो सामर्थ्यबाटै चकृषे= रचना गरी यथावत् धारणा गरी रहनु भएको छ, परिभूः एषि= सबैमाथि वर्तमान भई सबैलाई प्राप्त भई रहनु भएको छ, आदिवम्= द्योतनात्मक सूर्यादिलोक अपः= अन्तरिक्ष लोक र जल ई सबैका प्रतिमान अर्थात् परिमाणकर्त्ता तपाईं नै हुनुहुन्छ तथा तपाईं अपरिमेय हुनुहुन्छ, कृपा गरी हामीलाई आफ्नो सृष्टि को विज्ञान दिनुहोस् ॥१३॥

## प्रार्थनाविषयः

विजानीह्यार्यान् ये च दस्यवो बर्हिष्मते रन्धया
शासदव्रतान्। शाकी भव यजमानस्य चोदिता
विश्वेत्ता ते सधमादेषु चाकन ॥१४॥

- ऋ० १.४.१०.८

व्याख्यान– सबैलाई यथायोग्य जानन् हुने हे ईश्वर ! तपाईं आर्यान्= विद्या, धर्मादि उत्कृष्ट स्वभावाचरणयुक्त आर्यहरुको ख्याल राख्नुहोस्, येच दस्यवः= अरू जुन नास्तिक, डाँका, चोर, विश्वासघाती, मूर्ख, विषयलम्पट, हिंसादिदोषयुक्त, असल काम हरु मा विघ्नखडा गर्ने, स्वार्थी, स्वार्थ साधन तत्पर, वेदविद्याविरोधी, अनार्य [अनाडी] मानिस बर्हिष्मते= सर्वोपकारक 'यज्ञ' लाई विध्वंशकारी छन्, ई सबै दुष्ट हरु लाई तपाईं रन्धय= [समूलान् विनाशय] मूल सहित नष्ट गरिदिनुहोस् र शासदव्रतान्= ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ एवं संन्यासादि धर्मानुष्ठानव्रत रहित, वेदमार्गोच्छदक अनाचारी हरु माथि यथा योग्य शासन गर्नु होस्। [तिनीहरु माथि चाँडै दण्ड निपातन गर्नु होस् ] जसले गर्दा तिनीहरु पनि शिक्षायुक्त भएर शिष्ट हुन् अथवा तिनको प्राणान्तै होओस्, किंवा ती हाम्रा वश मा नै रहून। शाकी= तथा जीव लाई परम शक्ति ले युक्त तेज दिने र यजमानस्य चोदिता=

यजमान लाई असल काम हरु मा प्रेरणाकारी हुनुन्छ, हजुर हामीलाई ननिका काम हरु मा निरोधक हुनुहोस् । मँ पनि सधमादेषु= उत्कृष्ट स्थान हरु मा निवास गर्दै विश्वेत्ताते= तपाईंको आज्ञा का अनुकूल सम्पूर्ण उत्तम कर्म हरु को चाकन = कामना गर्दछु, र त्यो हजुरले पूर्ण गरिदिनु होला ॥१४॥

स्तुतिषयः

न यस्य॒ द्यावा॑पृथि॒वी अ॒नु व्यचो॒ न सिन्ध॑वो॒
रज॑सो॒ अन्त॑मान॒शुः । नोत स्ववृ॑ष्टिं॒ मदे॑ अस्य॒
युध्य॑त॒ एको॑ अ॒न्यच्च॑कृषे॒ विश्व॑मानु॒षक् ॥१५॥

- ऋ० १.४.१४.१४

व्याख्यान– हे परमैश्वर्य युक्त ईश्वर ! तपाईं इन्द्र हुनुहुन्छ । हे मनुष्य ! परमात्मा को अन्त-यो एत्ति मात्र हो भन्ने होईन, उसको व्याप्तिको परिच्छेद [इयत्ता] परिमाण कसैले गर्न सक्दैन तथा द्यावा= अर्थात् सूर्यादिलोक - सर्वोपरि आकाश तथा पृथिवी= मध्य अर्थात् निकृष्टलोक ई कुनैले पनि उसको आदि - अन्तलाई पाउन सक्तैन, किनभने अनुव्यचः= ऊ सबैका बीच मा अनुस्यूत अर्थात् परिपूर्ण भइरहेको छ तथा न सिन्धवः=अन्तरिक्ष मा जुनदिव्य जल तथा रजसः=समस्त लोक हरु ले पनि न अन्तम् आनशुः=उसको अन्त पाउन सक्तैनन् नोत स्ववृष्टिं मदे= वृष्टि प्रहार ले युध्यतः– युद्ध गर्दै वृत्र [मेघ] तथा बिजुली गर्जन आदि ले पनि अस्य= ईश्वर को पार पाउन सक्तैनन् । हे परमात्मन् ! हजुरको अन्त कसले पाउन सक्छ र किनकि एकः= एक आफुभन्दा भिन्न सहायक बिना नै स्व सामर्थ्य ले विश्वम्= सम्पूर्ण जगत् लाई आनुषक्= आनुषक्त, अर्थात् तेसमा व्याप्त हुनुहुन्छ र चकृषे= [कृतवान्] आफूले नै उत्पन्न गरेको छ, फेरि जगत् का पदार्थ ले तपाईंको अन्त कसरी पाउन सकनु तथा अन्यत्= तपाईं जगत्रूप पनि कहिल्यै बन्नु हुन्न, न आफु भित्रबाटै

जगत्को रचना गर्नु हुन्छ, किन्तु आफ्नो अनन्त सामर्थ्यद्वारा नै जगत्को रचन, धारण र लय यथासमय मा गर्नु हुन्छ, एसले हजुरको सहायता हामीलाई सदैब छ ॥१५॥

## प्रार्थनाविषयः

ऊर्ध्वो नः पाह्यंहसो नि केतुना विश्वं समत्रिणं
दह। कृधी न ऊर्ध्वाञ्चरथाय जीवसे विदा
देवेषु नो दुवः ॥१६॥

- ऋ० १.३.१०.१४

व्याख्यान– हे सर्वोपरि विराजमान परब्रह्म ! तपाईं उर्ध्वः= सबैभन्दा उत्कृष्ट हुनुहुन्छ, हामीलाई स्वकृपा द्वारा उत्कृष्ट गुण हरु ले युक्त गर्नुहोस् तथा ऊर्ध्वदेश अर्थात् उच्च स्थान मा हाम्रो रक्षा गर्नु होला। हे सर्व पापप्रणाशक ईश्वर ! हामीलाई केतुना= विज्ञान अर्थात् विविध थरिका विद्या हरु को दान दिएर अंहसः = अविद्यादि महापाप हरु बाट निपाहि= नितरं पाहि सदैब अलग्ग राख्नु होस् तथा विश्वम् = एस सकल संसार को पनि नित्य पालन गर्नु होला। हे सत्यमित्र न्यायकारिन् ! जुनसुकै प्राणाी अत्रिणम् = हामीसंग शत्रुता गर्दछ तेसलाई र काम क्रोधादि शत्रुहरु लाई तपाईं सन्दह= सम्यक् अर्थात् राम्रोसंग भस्मीभूत गरिदिनु होस् - राम्रो संग जलाई दिनुहोस्, कृधी न ऊर्ध्वान्= हे कृपानिधे ! हामीलाई विद्या, शौर्य, धैर्य, बल, पराक्रम, चातुर्य, विविध धन, ऐश्ववर्य, विनय, साम्राज्य, सम्मति, सम्प्रीति, स्वदेशसुख सम्पादनादि गुणहरुमा सम्पूर्ण नरदेहधारि हरु भन्दा धेरै उत्तम बनाई दिनुहोस् तथा चरथाय, जीवसे= सबै भन्दा धेर आनन्द, भोग, सबै देशहरुमा अव्याहतगमन इच्छानुकूल जानु आउनु, आरोग्यपूर्ण शरीर शुद्ध मानस बल र विज्ञान इत्यादिका लागि हामीलाई उत्तमता र आफ्नो आज्ञा पालन गर्ने गुण ले युक्त गर्नुहोस्, विदा = विद्यादि उत्तमोत्तम धन देवेषुनः दुवः= विद्वान् हरु का माभ्क मा हामीलाई

पुऱ्याउनु होस् अर्थात् विद्वान्वर्ग का माझ मा पनि हामीलाई उत्तम प्रतिष्ठा ले युक्त राख्नु होस् ॥१६॥

## प्रार्थनाविषयः

अदि॑ति॒र्द्यौरदि॑ति॒र॒न्तरि॑क्ष॒मदि॑तिर्मा॒ता स पि॒ता स
पुत्र : । विश्वे॑ दे॒वा अदि॑ति॒ : पञ्च॒ जना॒
अदि॑तिर्जा॒तमदि॑ति॒र्जनि॑त्वम् ॥१७॥

- ऋ० १.६.१६.१०

व्याख्यान– हे त्रैकाल्याबाध्येश्वर ! अदितिर्द्यौः= तपाईं सदैव विनाशरहित र स्वप्रकाशरूप हुनुहुन्छ । अदिरन्तररिक्षम्= अविकृत - विकार मा प्राप्त न हुने तथा सबैका अधिष्ठाता हुनुहुन्छ अदितिर माता= तपाईंमोक्ष प्राप्त जीव हरु लाई - अविनश्वर अर्थाात् विनाश रहित सुख दिनु हुने र अत्यन्त मान गर्नुहुने हुनुहन्छ, सःपिता-अतःअविनाशीस्वरूप हामी सबैका पिता [जनक] र पालक हुनुहुन्छ अरू सःपुत्र= अतः तपाई मुमुक्षु, धर्मात्मा र विद्वान् वर्ग लाई नरकादि दुःख हरु बाट हटाएर पवित्र र त्राणकारी हुनुहुन्छ । विश्वेदेवाः अदितीः= समस्त दिव्यगुण-विश्वधारण, सिर्जन, मारण, पालन आदि दिव्य कार्यहरु गर्ने अविनाशी परमात्मा तपाईं नै हुनुहुन्छ । पञ्चजनाअदितिः– पञ्चप्राण, जुन जगत् का जीवन हुन् ती पनि तपाईंले रचनु भएको हो, तथा तपाईंका नाम पनि हुन् जातमदितिः= एक चेतन ब्रह्म हजुर सदा प्रादुभूर्त हुनुहुन्छ र सबै [पदार्थ] कहिले अप्रादुर्भूत [विनाशभूत] पनि हुन जान्छन् अदितीर्जनित्वम्= त्यो अविनाशीस्वरूप तपाईं सम्पूर्ण जगत् का जनित्वम्= जन्म का हेतु हुनुहुन्छ ॥१७॥

## प्रार्थनाविषयः

ऋजुनीती नो वरुणो मित्रो नयतु विद्वान्
अर्यमा देवैः सजोषाः ॥१८॥

- ऋ० १.६.१७.१

व्याख्यान– हे महाराजाधिराज परमेश्वर! तपाईंले हामीलाई ऋजुनीती= सरल [शुद्ध] कोमलत्वादिगुण विशिष्ट चक्रवर्ती राजा हरु को नीति लाई नयतु = स्वकृपा दृष्टि ले प्राप्त गराउनु होस्। तपाईं वरुण= सर्वोत्कृष्ट हुनाले वरुण हुनुहुन्छ, एसर्थ हामीलाई वरराज्य, वरविद्या, र वरनीति प्रदान गर्नु होस् तथा तपाईं मित्रः= शत्रुतारहित सबैका मित्र हुनुहुन्छ, हामीलाई पनि मित्रगुणयुक्त न्यायाधीश बनाई दिनुहोस् तथा तपाईं विद्वान्= सर्वोत्कृष्ट विद्वान् हुनुहुन्छ, हामीलाई पनि हजुरले सत्यविद्या ले युक्त सुनीति दिएर साम्राज्याधिकारी सद्यः गर्नुहोस् तथा तपाईं अर्यमा= [यमराज] प्रिय अप्रिय लाई छोडेर न्याय मा वर्त्तमान हुनुहुन्छ, समस्त संसार का जीव हरु को पाप-पुण्य को यथायोग्य व्यवस्था गर्नुहुने तपाईंले हामीलाई पनि तादृश गर्नुहोस्, जसबाट देवैः, सजोषाः= हजुरको कृपा ले विद्वान् वर्ग दिव्यगुण हरु का साथ उत्तम प्रीति युक्त होऊन, हजुरमा रमण र हजुरको सेवन गर्ने होऊन्। हे कृपासिन्धो भगवन्! हामी माथि कृपा गर्नु होस् जसले हामी सुनीतियुक्त हौं र हाम्रो स्वराज्य अत्यन्त बढोस् ॥१८॥

## प्रार्थनाविषयः

त्वं सोमासि सत्पतिस्त्वं राजोत वृत्रहा।
त्वं भद्रो असि क्रतुः ॥१९॥

- ऋ० १.६.१९.५

व्याख्यान– सोम= हे सोम राजन ! सत्पते ! परमेश्वर ! त्वम्= तपााईं सोमः= सोम, सर्वसवनकर्त्ता-सबैको सार निकाल्नु हुने, प्राप्यस्वरूप शान्तात्मा असि = हुनुहन्छ तथा त्वं सत्पति : = तपाईं

सत्पुरुषजन हरु को प्रतिपालन गर्ने हुनुहुन्छ तपाईं, राजा= सबैका राजा उत = अरू वृत्र हा= मेघ को रचना गर्ने, धारण गर्ने र हनन् गर्ने हुनुहुन्छ त्वम् = तपाईं भद्रः – भद्रस्वरूप, भद्रकर्त्ता अरू क्रतु : = अखिल जगत् का कर्ता असि = तपाईं नै हुनुहुन्छ ॥१९॥

## प्रार्थनाविषयः

त्वं नः सोम विश्वतो रक्षा राजन्नघायतः ।
न रिष्येत् त्वावतः सखा ॥२०॥

- ऋ० १.६.२०.८

व्याख्यान – सोम, राजन् = हे सोम ! राजन ईश्वर ! त्वम् = तपाईं अघायत : = जुनकुनै प्राणी हामी भित्र पापी र पाप गर्ने इच्छा भएका छन् ती विश्वतः = सबै प्राणी हरु बाट नः = हाम्रो रक्ष = रक्षा गर्नु होस्, त्वावत : सखा = जसका तपाईं साखै मित्र हुनुहुन्छ न, रिष्येत् = त्यो कहिल्यै विनष्ट हुँदैन, किन्तु हजुर जस्तो महान् सहायक छँदा हामीलाई तिलमात्र पनि दुःख वा डर कहिल्यै हुँदैन, जुन तपाईंको मित्र छ र जसका तपाईं मित्र हुनुहुन्छ, भने तेसलाई दुःख कसरी हुन्छ र ॥२०॥

## प्रार्थनाविषयः

तद्विष्णोः परमं पदं सदा पश्यन्ति सूरयः ।
दिवीव चक्षुराततम् ॥२१॥

- ऋ० १.२.७.२०

व्याख्यान – हे विद्वान् एवं मुमुक्षु जीव हो ! विष्णोः= विष्णु को जुन परमम्= अत्यन्त उत्कृष्ट पदम्= पद [पदनीय] सबैले जान्न योग्य, जसमा प्राप्त भएर पूर्णानन्द मा रहन्छन् फेरि त्यहाँ बाट कहिल्यै पनि दुःख सागर मा पर्दैनन् तेस पद लाई सूरयः=धर्मात्मा, जितेन्द्रिय, सबैका हितकारक विद्वान् हरु सदापश्यन्ति= सदा यथावत् उत्तम विचार ले हेर्दछन्, त्यो परमेश्वर को पद हो । कुन दृष्टान्त हो भने जस्तै आकाश मा चक्षुः= आँखा को व्याप्ति वा सूर्य को

प्रकाश सबैतिर व्याप्त छ, तेसरी नै दिवीव, चक्षुराततम्= परब्रह्म सबै ठाउँ मा परिपूर्ण, एकरस र भरिई रहेको छ। उही परमपदस्वरूप परमात्मा परमपद हो, एसैकोप्राप्ति भएमा जीव सम्पूर्ण दुःख हरु बाट छुट्तछ, अन्यथा जीव लाई कहिल्यै पनि परमसुख प्राप्त हुन सक्तैन ! एस कारण जसरी भए पनि परमेश्वर को प्राप्ति मा यथावत् प्रयत्न गर्नु पर्दछ ॥२१॥

## प्रार्थनाविषयः

स्थिरा वः सन्त्वायुधा पराणुदे वीळू उत
प्रतिष्कभे। युष्माकमस्तु तविषी पनीयसी मा
मर्त्यस्य मायिनः ॥२२॥

- ऋ० १.३.१८.२

व्याख्यान– [परमेश्वरो हि सर्वजीवेभ्य आशीर्ददाति] ईश्वर सबै जीव हरु लाई आशीर्वाद दिनु हुन्छ - हे जीव ! वः= [युष्माकम्] तिमीहरुका लागी आयुधा= आयुध अर्थात् शतघ्नी [तोप], भुशुण्डी [बन्दूक], धनुष-बाण करवाल अर्थात् तलवार शक्ति अर्थात् बरछी आदि शस्त्र स्थिरा= स्थिर र वीळू= दृढ हुन् । कुन प्रयोजनका लागी हुन्? पराणुदे= तिम्रा शत्रु हरु को पराजय का लागी, जसमा तिम्रा शत्रु हरु ले तिमीलाई कहिल्यै पनि दुःख दिन नसकून् अनि उत, प्रतिष्कभे= शत्रु हरु को वेग लाई थाम्न का लागी युष्माकमस्तु, तविषी पनीयसी= तिम्रो बलरूप उत्तम सेना सकल संसार मा प्रशंसित होस्, जसले तिमी संग लड्न का लागी शत्रु को कुनै संकल्प पनि नहोस्, परन्तु मा मर्त्यस्य मायिनः= जुन अन्यायकारी मनुष्य छ, तेसलाई मँ आशीर्वाद दिन्न। दुष्ट, पापी, ईश्वर भक्तिरहित मानिस को बल र राज्यैश्वर्यादि कहिल्यै बढ्दैन, तेसको सदा पराजय नै हुनेछ। [भक्तजन प्रार्थना गर्दछन्] हे बन्धु वर्ग हो ! आउनुहोस् हामी सबैजना मिलेर समस्त दुःख हरु को विनाश र विजय का लागी

ईश्वर लाई प्रसन्न पारौं, ईश्वर ले आशीर्वाद दिनेछन् । जसले हाम्रा वैरी हरु कहिल्यै बढ्न् न सकूँन् ॥२२॥

## स्तुतिविषयः

विष्णोः कर्माणि पश्यत यतो व्रतानि पस्पशे ।
इन्द्रस्य युज्यः सखा ॥२३॥

- ऋ० १.२.७.१९

व्याख्यान– हे जीव गण! विष्णोः = व्यापक ईश्वर द्वारा गरिएका कर्माणि = दिव्य जगत् उत्पत्ति, स्थिति, प्रलय आदि कर्म हरु लाई पश्यत – तिमिले हेर । प्रश्न - कुन हेतु ले हामी जानौं कि ई कर्म हरु व्यापक ईश्वर का कर्म हुन ? उत्तर - यतो व्रतानि पस्पशे = जसबाट हामी जीव हरु ब्रह्मचर्यादि व्रत तथा सत्यभाषाणादि व्रत र ईश्वर का नियम हरु को अनुष्ठान गर्नलाई शरीरधारी भएर समर्थ भएका छौं, यो काम उनैको सामर्थ्य बाट भएको हो, किनकि इन्द्रस्य युज्यः, सखा = इन्द्रिय हरु का साथ वर्तमान कर्म हरु को कर्त्ता, तथा भोक्ता जुन जीव छ तेसको उही एक मात्र योग्य मित्र हो, अन्य कुनै छैन, किन कि ईश्वर जीव को अन्तर्यामी सखा हो, त्यो भन्दा ठूलो जीव को हितकारी अर्को कोही हुन सक्तैन, एस कारण परमात्मा संग सदा मित्रता राख्नु पर्दछ ॥२३॥

## प्रार्थनाविषयः

परा णुदस्व मघवन्नमित्रान्त्सुवेदा नो वसू कृधि ।
अस्माकं बोध्यविता महाधने भवा वृधः
सखीनाम् ॥२४॥

- ऋ० ५.३.२१.२५

व्याख्यान – हे मधवन् = परमैश्वर्यवन् ! इन्द्र ! परमात्मन् ! अमित्रान् = हाम्रा सबै शत्रु हरु लाई पराणुदस्व = परास्त गरिदिनुहोस् । हेदातः ! सुवेदा, नो, वसु कृधि = हाम्रा लागी समस्त पृथिवी को धन सुलभ गरिदिनु होस् । महाधने = युद्ध मा अस्माकम्= हाम्रो र

सखी नाम्= हाम्रा मित्र तथा सेना आदि का अविता रक्षक एवं वृध= वर्धक भव= तपाईं नै हुन हुन्छ तथा बोधि= हामीलाई आफ्नै मित्र ठान्नुहोस् । हे भगवन् ! जब हजुर नै हाम्रा योद्धा हरु को रक्षक हुनु हुनेछ तब मात्र हाम्रो सर्वत्र विजय हुनेछ । एसमा सन्देह छैन ॥२४॥

## प्रार्थनाविषयः

शं नो भगः शमु नः शंसो अस्तु, शं नः
पुरन्धिः शमु सन्तु रायः । शं नः सत्यस्य सुयमस्य
शंसः शं नो अर्यमा पुरुजातो अस्तु ॥२५॥

- ऋ० ५.३.२८.२

व्याख्यान– हे ईश्वर ! भगः= तपाईंले कृपा गर्नु भएको ऐश्वर्य शं न := हाम्रा लागि सुख कारक होस् र शमु,नः, शंसो अस्तु = तपाईंका कृपा ले हाम्रो प्रशंसा सदैव सुख कारक होस् । पुरन्धिःशमु, सन्तु, रायः= संसार लाई धारण गर्नुहुने तपाईं आनन्द दायक हुनुहोस् तथा तपाईंको कृपाले वायु, प्राण एवं सम्पूर्ण धनहरु पनि आनन्द दायक हुन् । शन्नः, सत्यस्य सुयमस्य शंसः= सत्य, यथार्थ धर्म, सुसंयम र जितेन्द्रियतादि लक्षण युक्तको जुन प्रशंसा [पुण्यस्ततुी] समस्त संसार मा प्रसिद्ध छ त्यो हाम्रा लागी परमानन्द र शान्तियुक्त होस् । शंनो, अर्यमा= न्यायकारी तपाईं पुरुजात : = अनन्तसामर्थ्ययुक्त हुनुहुन्छ हाम्रा लागी कल्याणकारक अस्तु =हुनुहोस् ॥२५॥

## स्तुतिविषयः

त्वमसि प्रशस्यो विदथेषु सहन्त्य । अग्ने
रथीरध्वराणाम् ॥२६॥

- ऋ० ५.८.३५.२

व्याख्यान– हे अग्ने= सर्वज्ञ ! तपाईं नै सर्वत्र प्रशस्यः= स्तुति गर्न योग्य हुनुहुन्छ, अर्को कोही छैन । विदथेषु = यज्ञ र युद्धादि मा तपाईं नै स्तोतव्य हुनुहुन्छ । जसले तपाईंको स्तुति छोडेर अन्य जडादि को स्तुति गर्दछ तेसलाई यज्ञादिशुभकर्म मा र युद्धादि हरु मा कहिल्यै

विजय सिद्ध हुँदैन। सहन्त्य= शत्रु समूह का घातक तपाईं नै हुनुहुन्छ। रथीः अध्वराणाम्= अध्वर हरु मा अर्थात् यज्ञ हरु मा तथा युद्ध हरु मा तपाईं नै रथी हुनुहुन्छ। हाम्रा शत्रुगण का योद्धा हरु लाई परास्त गर्ने तपाईं नै हुनुहुन्छ, एस कारण ले गर्दा हाम्रो पराजय कहिल्यै पनि हुन सक्तैन ॥२६॥

## प्रार्थनाविषयः

तन्न इन्द्रो वरुणो मित्रो अग्निराप ओषधीर्वनिनो
जुषन्त। शर्मन्त्स्याम मरुतामुपस्थे यूयं पात
स्वस्तिभिः सदा नः ॥२७॥

- ऋ० ५.३.२७.२५

व्याख्यान– हे भगवन् ! तन्न, इन्द्रः= सूर्य वरुणः= चन्द्रमा, मित्रः= वायु, अग्निः= अग्नि आपः= जल तथा औषधिः= वनस्थ वृक्षादि सबै पदार्थ हजुरको आज्ञा ले सुख रूप भएर हाम्रो जुषन्त= सेवन गरून् अर्थात् हाम्रो मन लाई उपयुक्त कार्य हरु मा खटाऊन्। हे रक्षक ! मरुतामुपस्थे= प्राणादि का सुसमीप बसे का हामी हजुरको कृपा ले शर्मन्त्स्याम = सदा सुख युक्त रहौं, स्वस्तिभिः= सबै प्रकार का कल्याणकारी रक्षण हरु द्वारा यूयं पात= [आदरार्थ बहुवचनम्] हजुरले हाम्रो रक्षा गर्नु होस्, कुनै प्रकार ले पनि हाम्रो हानि न होस् ॥२७॥

## स्तुतिविषयः

ऋषिर्हि पूर्वजा अस्येक ईशान ओजसा।
इन्द्र चोष्कूयसे वसु ॥२८॥

- ऋ० ५.८.१७.४१

व्याख्यान – हे ईश्वर ! ऋषि : = सर्वज्ञ पूर्वजाः = अरू सबै पूर्वजहरु का एकः हि= एक, अद्वितीय ईशानः= ईशन - कर्त्ता, अर्थात् ईश्वरता गर्नु हुने तथा सबैभन्दा महान् प्रलयोत्तर काल मा पनि आफु रहने ओजसा= अनन्त पराक्रम ले युक्त हुनुहुन्छ। हे इन्द्र = महाराजाधिराज !

चोष्कूयसे वसु= ज्ञान आदि सम्पूर्ण धन का दाता, आफ्नो कृपा को प्रवाह आफ्ना सेवक हरु माथि चाँडो गरी रहनु भएको छ। तपाईं अत्यन्तै आर्द्रस्वभाव हुनुहुन्छ ॥२८॥

## प्रार्थनाविषयः

नेह भद्रं रक्षस्विने नावयै नोपया उत। गवे च
भद्रं धेनवे वीराय च श्रवस्यतेऽनेहसो व ऊतयः
सु ऊतयो व ऊतय : ॥२९॥

- ऋ० ६.४.९.१२

व्याख्यान– हे भगवन् ! रक्षस्विने भद्रं, नेह = पापी, हिंसक, दुष्टात्मा लाई एस संसार मा सुख नदिनु होला। नावयै = धर्म देखि विपरीत हिड्ने हरु लाई कहिल्यै सुख न मिलोस्। नोपया उत = तथा अधर्मीसंगै रहने तेसका सहायक लाई पनि सुख नहोस्। हाम्रो हजुर संग एस्तो प्रार्थना छ कि दुष्ट हरु लाई कहिल्यै पनि सुख हुनु हुँदैन, नत्र कुनै पनि व्यक्ति को धर्म मा रुचि हुँने छैन, अतः एस संसार मा सदा धर्मात्मा हरु लाई नै सुख प्रदान गर्नु होला तथा गवे = हाम्रा शम दमादियुक्त इन्द्रिय हरु धेनवे= दूध दिने गौआदि वीराय= विर पुत्र र शुरवीर भृत्य अर्थात् कर्मचारी श्रवस्यते= विद्या, विज्ञान र अन्नादि ऐश्वर्य युक्त हाम्रा देश का राष्ट्राध्यक्ष र धनाढ्यजन इनिहरु का लागी अनेहसः= निष्पाप, निरुपद्रव, स्थिर एवं दृढ सुख प्राप्त होस्। सु ऊतयो व ऊतयः= [वः युष्माकं, बहुवचनमादरार्थम्] हे सर्व रक्षकेश्वर ! तपाईं सम्पूर्ण रक्षण गर्ने अर्थात् समस्त धर्मात्मा हरु का रक्षक हुनुहुन्छ। तिनीहरु लाई सदैव भद्रम्= कल्याण [परम सुख] प्राप्त हुन्छ, अरूलाई हुँदैन ॥२९॥

## स्तुतिविषयः

वसुर्वसुपतिर्हि कमस्यग्ने विभावसु : । स्याम ते सुमतावपि ॥३०॥

- ऋ० ६.३.४०.२४

व्याख्यान– हे परमात्मन् ! तपाईं वसु= सबैलाई आफु मा बसाउने र सबैमा आफु बसने हुनुहुन्छ तथा वसुपतिः= पृथिव्यादि वासहेतुभूत हरु का पति हुनुहुन्छ । अग्ने कमसि = हे अग्ने ! विज्ञानानन्दप्रकाश स्वरूप ! तपाईं नै सबैका सुख कारक र सुखस्वरूप हुनुहुन्छ तथा विभावसुः= सत्यस्वप्रकाशकैधनमय हुनुहुन्छ । हे भगवन्! एस्तो जुन तपाईं हुनुहुन्छ ते = तपाईंको सुमतौ = अत्यन्त उत्कृष्ट ज्ञान र परस्पर प्रीति मा हामीहरु अपि स्याम= स्थिर हौं ॥३०॥

## प्रार्थनाविषयः

वैश्वानरस्य सुमतौ स्याम राजा हि कं भुवना –
नामभिश्रीः । इतो जातो विश्वमिदं वि चष्टे
वैश्वानरो यतते सूर्येण ॥३१॥

- ऋ० १.७.६.१

व्यख्यान– हे मानिस हो ! जुन हाम्रो तथा समस्त जगत् को राजा= राजा, भुवनानाम्= समस्त भुवन हरु को स्वामी कम्= सबैको सुखदाता र अभि श्रीः= सबैको निधि अर्थात् शोभाकारक हो । वैश्वानरो, यतते, सूर्येण = संसारस्थ सबै नरहरु को नेता अर्थात् नायक र सूर्य द्वारा प्रकाशकर्त्ता पनि उही हो, अर्थात् सम्पूर्ण प्रकाशक पदार्थहरु उसैले रचेको हो । इतो जातो विश्वमिदं विचष्टे = एसै ईश्वर को सामर्थ्य बाटै यो संसार उत्पन्न भएको हो । वैश्वानस्य सुमतौ स्याम = तेस वैश्वानर परमेश्वर को सुमति, अर्थात् सुशोभन वा उत्कृष्ट ज्ञान मा हामी निश्चित सुखस्वरूप र विज्ञानवान हौं । हे महाराजाधिराजेश्वर ! तपाईंले निजकृपा द्वारा हाम्रो एस आशा लाई पूर्ण गरिदिनुहुन विन्ति गर्दछौं ॥३१॥

## स्तुतिविषयः

न यस्यं देवा देवता न मर्ता आपश्च न
शवंसो अन्तमापुः स प्ररिक्वा त्वक्षंसा क्ष्मो
दिवश्चं मरुत्वान्नो भवत्विन्द्रं ऊती ॥३२॥

- ऋ० १.७.१०.१५

व्याख्यान– हे अनन्तबल ! न यस्य– जुन तपाईंको र तपाईंका बल आदि सामर्थ्य को देवाः= इन्द्रिय हरु देवताः= विद्वान्, सूर्यादि तथा बुद्धि आदि न मर्ताः= साधारण मनुष्य आपश्चन= आप अर्थात् पानी, प्राण, वायु, समुद्र इत्यादि सबैले शवसः= तपाईंका बल को अन्तम् आपुः= कहिल्यै पार पाउन सक्तैनन् तर सः परिक्वा = तेस्तो तपाईं प्रकृष्टता संग इनमा व्यापक भएर इनिहरु भन्दा अतिरिक्त [विलक्षण] भिन्न नै परिपूर्ण भइरहनु भएको छ। जुन मरुत्वान् =अत्यन्त बलवान्इन्द्रः=परमात्मा त्वक्षसा =शत्रु हरु को छेदक बल ले क्ष्म :=पृथिवी लाई र दिवश्च स्वर्ग लाई धारण गर्दछ। अतः इन्द्र = परमात्मा ऊती=हाम्रो रक्षाका लागी भवतु= तत्पर हुनुहोस् ॥३२॥

## प्रार्थनाविषयः

जातवेंदसे सुनवाम सोमंमरातीयतो नि दंहाति
वेदंः । स नंः पर्षदतिं दुर्गाणि विश्वा नावेव
सिन्धुं दुरितात्यग्नि ॥३३॥

- ऋ० १.७.७.१

व्याख्यान्– हे जातवेदः= परब्रह्मन् ! तपाईं जातवेद हुनुहुन्छ, उत्पन्नमात्र समस्त जगत् लाई जान्ने हुनुहुन्छ, तपाईं सर्वत्र प्राप्त हुनुहुन्छ । जुन विद्वान हरु द्वारा ज्ञात हुने सबैमा विद्यमान [जात अर्थात् प्रादुर्भूत अनन्त धनवान् वा अनन्त ज्ञानवान् हुनुहुन्छ, एस कारण तपाईंको नाम 'जातवेद' हो ।] तेस्तो तपाईंका लागी वयं, सोम, सुनवाम = जति पनि सोम-प्रिय गुणविशिष्ठादि हाम्रा पदार्थ

छन् ती सबै प्रभुकै लागी हुन् । अतः हे कृपालो ! तपाईं अरातीयतः= दुष्ट शत्रु जो हामी धर्मात्माजन को विरोधी छ, तेसको वेदः = धन ऐश्वर्यादि लाई निदहाति= नित्य सन्तापित गरि दिनुहोस् जसले गर्दा तेसले दुष्टता छोडेर श्रेष्ठता लाई स्वीकार गरोस् तथा नः= हामीलाई दुर्गाणि, विश्वा= सम्पूर्ण दुस्सह, दुःख हरु बाट पर्षदति=पारितारेर तपाईले नित्य सुख प्राप्ति गराउनुहोस् । नावेव, सिन्धुम् = जस्तै अति कठिन नदी वा समुद्र बाट पार हुनका लागी नौका हुन्छ, तेसरी नै हामीलाई दुरितात्यग्निः= अत्यन्त पाप जनित समस्त पीडा हरु बाट पृथक् गरेर संसार मा र मुक्ति मा पनि चाँडै नै परम सुख प्राप्त गराउनु होस् ॥३३॥

## स्तुतिविषयः

स वज्रभृद्दस्युहा भीम उग्रः सहस्रचेता : शतनीथ
ऋभ्वा । चम्रीषो न शवसा पाञ्चजन्यो
मरुत्वान्नो भवत्विन्द्र ऊती ॥३४॥

- ऋ० १.७.१०.१२.

व्याख्यान– हे दुष्टनाशक परमात्मन् ! तपाईं वज्रभृत्= अच्छेद्य सामर्थ द्वारा सर्वशिष्ट हितकारक, दुष्ट विनाशक जुन न्याय धारण गरी रहनु भएको छ [प्राणो वा वज्रः इत्यादि शतपथादि को प्रमाण छ] अतएव दस्युहा= दुष्ट, पापी हरु लाई हननकारी हुनुहुन्छ, भीमः= तपाईंको न्याय र आज्ञा त्यागने हरु लाई उग्रः= भयंकर त्रास दिने हुनुहुन्छ । सहस्रचेता : = सहस्रौं विज्ञानआदि गुण हरु ले युक्त तपाईं नै हुनुहुन्छ । शतनीथः= सयौं असंख्यात पदार्थ हरु को प्राप्ति गराउँने हुनुहुन्छ । ऋभ्वा = विज्ञान आदि अत्यन्त प्रकाश हरु ले युक्त र सबैका प्रकाशक तथा महान् वा महाबलशाली हुनुहुन्छ । न चम्रीष : = कसैका चमू अर्थात् सेना को बसमा प्राप्त हुनु हुन्न । शवसा, पाञ्चजन्य = स्वशक्ति बाट तपाईं पाञ्चजन्य अर्थात् पाँचै प्राण हरु का जनक

हुनुहुन्छ। मरुत्वान् = सबैप्रकार का वायु हरु का आधार तथा सञ्चालक हुनुहुन्छ, अत एव तपाईं हे इन्द्रः= सर्वशक्तिमान. तपाईं नः= हाम्रो ऊती= रक्षाका लागि भवतु = प्रवृत्त हुनुहोस्, जसले हाम्रो कुनैकाम नबिग्रियोस् ॥३४॥

## प्रार्थनाविषयः

सेमं नः काममा पृण गोभिरश्वैः शतक्रतो ।
स्तवाम त्वा स्वाध्यः ॥३५॥

- ऋ० १.१.३१.९

व्याख्यान– हे शतक्रतो = अनन्तक्रियेश्वर ! हजुर असंख्यात विज्ञानादि यज्ञ हरु बाट प्राप्य हुनुहुन्छ तथा अनन्तक्रियाबलयुक्त हुनुहुन्छ, अतः तपाईं गोभिरश्वैः = गौ, उत्तम इन्द्रिय, श्रेष्ठ पशु, सर्वोत्तम अश्वविद्या [विमानादियुक्त] तथा 'अश्व' अर्थात् असल घोडा आदि पशु हरु र चक्रवर्ती राज्यैश्वर्य ले सेमं, नः, काममापृण= हाम्रो काम परिपूर्ण गरिदिनुहोस् । हामी पनि स्तवाम, त्वा, स्वाध्यः= सुबुद्धियुक्त भएर उत्तम प्रकार ले हजुरको स्तवन [स्तुति] गर्न सकौं । हामीलाई दृढ निश्चय छ कि हजुर बिना अरू कसैले पनि काम पूर्ण गर्न सक्तैन । जो व्यक्ति हजुरलाई छोडेर अर्काको ध्यान वा याचना गर्दछन्, तिनीहरुका सबै काम नाश हुन जान्छन् ॥३५॥

## स्तुतिविषयः

सोमं गीर्भिष्ट्वा वयं वर्धयामो वचोविदः
सुमृळीको न आ विश ॥३६॥

- ऋ० १.६.२१.११

व्याख्यान– हे सोम = सर्वजगदुत्पारकेश्वर ! त्वा = तपाईंलाई वचोविधः= शास्त्रवित् वयम्= हामीहरु गीर्भिः – स्तुति समूह द्वारा वर्धयामः=सर्वोपरिविराजमानमान्दछौं।सुमृळीकः,नःआविश=किनकि हामीलाई सुष्ठु सुख प्रदान गर्ने हजुरनै हुनुहुन्छ, अतः कृपागरेर

हाम्रो हृदय मा प्रवेश गरी विराजमान हुनुहोस्, जसले हामीहरु अविद्यान्धकार बाट छुटि विद्या सूर्य मा प्राप्त भई आनन्दित हौं ॥३६॥

## प्रार्थनाविषयः

सोमं रारन्धि नो हृदि गावो न यवसेष्वा ।
मर्यइव स्व ओक्ये ॥३७॥

- ऋ० १.६.२१.१३

व्याख्यान– हे सोम= सौम्य ! सौख्यप्रदेश्वर ! तपाईंले कृपा गरेर रारन्धि, नः हृदि = हाम्रा हृदय मा यथावत रमण गर्नुहोस् । [दृष्टान्त] जसरी गावः, न, यवसेषु आ = सूर्यको किरण, विद्वज्जन हरु को मन र गौ आदि पशु आफ्ना-आफ्ना विषय र घाँस आदि मा रमण गर्दछन् वा जसरी मर्यः इव, स्वे, ओक्ये = मनुष्य आफ्ना घर मा रमण गर्दछ, तेसै गरी स्व प्रकाशयुक्त हजुर सदा हाम्रा हृदय मा अर्थात् आत्मा मा रमण गर्नु होस् जस बाट हामीलाई सबैप्रकार को यथार्थ सर्वज्ञान र आनन्द प्राप्त होस् ॥३७॥

## स्तुतिविषयः

गयस्फानो अमीवहा वसुवित्पुष्टिवर्धनः ।
सुमित्रः सोम नो भव ॥३८॥

- ऋ० १.६.२१.१२

व्याख्यान– हे परमात्माभक्त जीव हरु ! हाम्रो जुन इष्ट परमेश्वर छ त्यो गयस्फानः= प्रजा, धन, जनपद र स्वराज्य वृद्धिकर्त्ता हो, तथा अमीवहा= शरीर, इन्द्रियजन्य रोग र मानस रोगहरु लाई हनन (विनाश)कारी हो । वसुवित् = पृथिव्यादि सम्पूर्ण वसु हरु को ज्ञाता हो अर्थात् सर्वज्ञ र विद्यादि धन को दाता हो, पुष्टिवर्धनः= हाम्रो शरीर, इन्द्रिय, मन र आत्मा को पुष्टि बर्धक हो । सुमित्र : सोम, नः भव =

सुष्ठु, सबैको यथावत परममित्र उही हो, अतः हामी ऊ संग यो याचना गरौं कि हे सोम ! सर्व जगदुत्पादक ! तपाईं नै कृपा गरेर हाम्रा सुमित्र हुनु होस् र हामीहरु पनि समस्त जीव हरु का मित्र हौं । तथा अत्यन्त मित्रता चाहीं तपाईं संगनै राखौं ॥३८॥

## प्रार्थनाविषयः

त्वं हि विश्वतोमुख विश्वतः परिभूरसि ।
अप नः शोशुचदघम् ॥३९॥

- ऋ० १.७.५.६

व्याख्यान– हे अग्ने परमात्मन् ! त्वं, हि = तपाईं नै निश्चित विश्वतः परिभूरसि= सम्पूर्ण जगत् र सम्पूर्ण स्थान हरु मा व्याप्त हुनुहुन्छ, अत एव तपाईं विश्वतोमुख हुनुहुन्छ । हे विश्वतोमुख= हे सर्वतोमुख अग्ने! तपाईं 'स्वमुख' नाम स्वशक्ति द्वारा सबै जीवहरुका हृदयमा सधैं भरि सत्योपदेश गरी रहनु भएको छ, तेही तपाईंको मुख हो । हे कृपालो ! अप, नः शोशुचदघम्= तपाईंको इच्छा ले हाम्रा पाप सबै नष्ट भएर जाऊन् जसले हामी निष्पाप भएर तपाईंको भक्ति र आज्ञा पालन मा सदा तत्पर रहौं ॥३९॥

## स्तुतिविषयः

तमीळत प्रथमं यज्ञसाधं विश आरीराहुत–
मृञ्जसानम् । ऊर्जः पुत्रं भरतं सृप्रदानुं देवा
अग्निं धारयन्द्रविणोदाम् ॥४०॥

- ऋ० १.७.३.३

व्याख्यान – हे मानिस हो ! तिमी हरु तमीळत= तेस अग्नि को स्तुति गर, त्यो अग्नि कस्तो छ भने ? जुन प्रथमम्= सबैको आदि कारण हो तथा यज्ञसाधनम् = समस्त संसार र विज्ञानादि यज्ञ को साधक अर्थात् सिद्ध गर्ने र सबैको जनक हो । हे विशः = मानिस हो ! उसैलाई स्वामी मानेर आरीः= उसैलाई प्राप्त होओ, जसलाई आहुतम्= हामी दीनता

पूर्वक पुर्कादछौं, ऋञ्जसानम्= विज्ञानादि द्वारा विद्वान् हरु सिद्ध गर्दछन् र जान्दछन् । ऊर्जः पुत्रं भरतम् = पृथिव्यादि जगत्रूप अन्न को पुत्र, अर्थात् पालन कर्त्ता तथा 'भरत' अर्थात् तेसै अन्न को पोषण र धारणा कर्ता हो । सृप्रदानुम् = सम्पूर्ण जगत् लाई गतिमान गर्ने शक्ति र ज्ञान को दाता हो। उसै लाई देवाः, अग्निं, धारयन् द्रविणोदाम्= देव हरु अर्थात् विद्वान् हरु अग्नि भनेर धारण गर्दछन्। उही समस्त जगत् लाई द्रविण अर्थात् निर्वाह का लागी अन्न जल आदि सम्पूर्ण पदार्थ हरु र विद्यादि पदार्थ हरु को प्रदाता हो । तेस अग्नि परमात्मा लाई छोडेर अन्य कसैको भक्ति वा याचना कहिल्यै पनि कसै ले गर्नु हुँदैन ॥४०॥

## प्रार्थनाविषयः

तमूतयो रणयञ्छूरसातौ तं क्षेमस्य क्षितयः कृण्वत
त्राम् । स विश्वस्य वरुणस्येश एको मरुत्वान्नो
भवत्विन्द्र ऊती ॥४१॥

- ऋ० १.७.९.७

व्याख्यान = हे मनुष्य हो ! तमूतयः= उसै इन्द्र परमात्माको प्रार्थना र शरणागति ले हामीलाई ऊतयः= अनन्त रक्षण तथा बल आदि गुण प्राप्त हुने छन् । उही शूरसातौं = युद्ध मा निज हरुलाई यथावत् रणयन् = रमण तथा रणभूमि मा शूरवीर हरु को गुण-परस्पर प्रीति आदि प्राप्त गराउने छ, तं क्षेमस्य क्षितयः= हेशूर वीर मानिस हो ! उसै लाई क्षेम = कुशलता को त्राम्= रक्षक कृण्वत = गर, जसले आफ्नो पराजय कहिल्यै न होओस्, किन की सः विश्वस्य वरुणस्य = त्यो करुणामय सम्पूर्ण जगत् माथि करुणा गर्ने एकः= एक मात्र ईशः= ईश हो अर्को कुनै छैन । मरुत्वान् = प्राणवायु, बल, र सेनायुक्त त्यो परमात्मा नः ऊती [ऊतये] भवतु= हामी माथि स्व कृपाले राम्रो संग रक्षाकारी होस्, ईश्वर बाट रक्षित हामीहरु कहिल्यै पनि पराजित नहोऔं ॥४१॥

# स्तुतिविषयः

स पूर्वया निविदा कव्यतायोरिमाः प्रजा
अजनयन्मनूनाम् । विवस्वता चक्षसा द्यामपश्च
देवा अग्निं धारयन्द्रविणोदाम् ॥४२॥

- ऋ० १.७.३.२

व्याख्यान– हे मानिस हो ! सः= त्यो नै पूर्वया, निविदा= अनादि, सनातन, सत्य आदि गुण युक्त अग्नि 'परमात्मा' थियो, अर्को कोही थिएन । तब सृष्टि को आदि मा स्वप्रकाशस्वरूप एक ईश्वर ले प्रजा उत्पत्ति को ईक्षणता अर्थात् विचार गऱ्यो । कव्यतायोः, इमाः= र सर्वज्ञतादि सामर्थ्य बाट सत्यविद्यायुक्त 'वेद' हरु को तथा मनूनाम्= मननशील मनुष्य हरु को तथा अन्य पशु वृक्ष आदि प्रजाः= प्रजा लाई अजनयत्= उत्पन्न गऱ्यो साथै उसले मनुष्य र पशु आदि को परस्पर व्यवहार पनि चलायो । परन्तु मननशील मनुष्य ले स्तुति गर्न योग्य चाहिँ अवश्य उही हो । विवस्वता चक्षसा= समस्त सूर्यादि तेजस्वी पदार्थ हरु लाई प्रकाश दिने, आफ्नो बल ले द्याम्= स्वर्ग अर्थात् सुखविशेष, सम्पूर्ण लोक, अपः= अन्तरिक्ष मा पृथिव्यादी मध्यम लोक र निकृष्ट दुःख विशेष नरक र सबै दृश्यमान् तारा आदि लोक उसैले रचेका हुन् । जुन एस्तो सच्चिदानन्दस्वरूप परमेश्वर देव हो उसै द्रविणोदाम्= विज्ञानादि धन दाता लाई नै देवः= विद्वान् हरु ले अग्निम्ः= अग्नि भनेर धारयन् - जान्दछन् । हामीहरु केवल उसैलाई मात्र भजौं ॥४२॥

## प्रार्थनाविषयः

वयं जयेम त्वया युजा वृतमस्माकमंशमुदवा भरेभरे। अस्मभ्यमिन्द्र वरिवः सुगं कृधि प्र शत्रूणां मघवन्वृष्ण्या रुज ॥४३॥

- ऋ० १.७.१४.४

व्याख्यान – हे इन्द्र = परमात्मन् ! त्वयायुजा, वयं जयेम = तपाईंका साथ मा वर्तमान रहेका तपाईंकै सहायता ले हामी हरु दुष्ट बैरी हरु लाई विजय गरौं । त्यो बैरी कस्तो छ भने आवृतम्= हाम्रा बल बाट घेरिए को छ। हे महाराजाधिराजेश्वर ! भरे भरे अस्माकमंशमुदव= प्रत्येक युद्ध मा हाम्रा अंश [बल] अर्थात् सेना को उदव= कृपा गरी उत्कृष्ट रीत ले रक्षण गर्नुहोस्। हामी क्षीण भएर कुनै युद्ध मा पराजय न भोगौं, किनकि जस लाई हजुर को सहारा छ भने तिनको सर्वत्र विजय नै हुन्छ ! हे इन्द्र ! मघवन्= महाधनेश्वर ! शत्रूणां वृष्ण्या= हाम्रा बैरी हरु को वीर्य र पराक्रमादि लाई प्ररुज= प्रभग्न= रुग्ण गरेर नष्ट गरिदिनु होस्। अस्मभ्यं, वरिवः सुगं, कृधि= हाम्रा निमित्त चक्रवर्ती राज्य र साम्राज्यधन लाई सुगम= सुख पूर्वक प्राप्ति गराउनु होस्, अर्थात् तपाईंको करुणा ले हाम्रो राज्य र धन सदावृद्धि मा प्राप्त होस् ॥४३॥

## स्तुतिविषयः

यो विश्वस्य जगतः प्राणतस्पतिर्यो ब्रह्मणे प्रथमो गा अविन्दत्। इन्द्रो यो दस्यूँरधराँ अवातिरन्मरुत्वन्तं सख्याय हवामहे ॥४४॥

- ऋ० १.७.१२.५

व्याख्यान – हे मनुष्य गण ! यः= जुन सम्पूर्ण विश्वस्य जगतः = जगत् अर्थात् स्थावर, जड, अप्राणी को र प्राणतः= चेतनायुक्त जगत् को पतिः= अधिष्ठाता र पालक हो तथा प्रथमः= जुन सम्पूर्ण जगत् को

पहिलो जो सदा देखि छ र ब्राह्मणे, गाः, अविन्दत्ः= जसले यही नियम बनाई राखेको छ कि ब्रह्म अर्थात् विद्वान् का लागि पृथिवी को लाभ र तेसको राज्य छ र जुन इन्द्रः= परम ऐश्वर्यवान् परमात्मा दस्यून् = डाँका हरु लाई अधरान्= तल खँदार्द छ र तिनलाई अवातिरत्= मारि नै हाल्द छ। मरुत्वन्तं, सख्याय, हवामहे= आओ मित्रहरु तथा भाईहरु हो! हामी सबै सम्प्रीति ले मिलेर मरुत्वान् अर्थात् परम अनन्त बलशाली इन्द्र परमात्मा लाई सखा भई दिनु हुनका लागी गद्‌गद् भएर पुकारौं। वहाँ ले भट्टै नै कृपा गरेर हामीसंग सखित्व [परममित्रता] गर्नु हुर्ने छ, एसमा अलिकति पनि सन्देह छैन ॥४४॥

## प्रार्थनाविषयः

मृळा नो रुद्रोत नो मयस्कृधि क्षयद्वीराय नमसा
विधेम ते। यच्छं च योश्च मनुरायेजे पिता
तदश्याम तव रुद्र प्रणीतिषु ॥४५॥

- ऋ० १.८.५.२

व्याख्यान – हे रुद्र = दुष्टजन हरु लाई रुवाउने रुद्रेश्वर ! नः= हामीलाई मृळ= सुखी गर्नुहोस् उत= तथा मयः, कृधि= हाम्रा निमित्त मय अर्थात् सुख को सम्पादन गर्नु होस्। क्षयद्वीराय, नमसा, विधेम, ते= वैरी हरु का वीर हरु लाई क्षय गर्नुहुने तपाईंको नमस्कारादि ले अत्यन्तै परिचर्या गर्ने हाम्रो यथावत् संरक्षण गर्नुहोस्। यच्छम्= हे रुद्र ! तपाईं हाम्रा पिता अर्थात् जनक र पालक हुनुहुन्छ, हाम्रा सम्पूर्ण जनता लाई सुखी गर्नुहोस्, योश्च= र जनता को रोग हरु को पनि नाश गर्नुहोस्। जस्तै मनुः पिता = मान्यतादिने पिता ले आयेजे= स्व प्रजा लाई राम्रो संगति र अनेक विध स्नेह गर्दछ, तेसै गरी तपाईंले हामी सबैको पालन गर्नु होस्। हे रुद्र= भगवन् ! तव, प्रणीतिषु= हजुरका आज्ञा को 'प्रणय' अर्थात् उत्तम न्याय युक्त नीति हरु मा प्रवृत्त भएर हामी तदश्याम= तपाईंका अनुग्रह ले वीर हरु को चक्रवर्ती राज्य प्राप्त गरौं ॥४५॥

## स्तुतिविषयः

देवो न यः पृथिवीं विश्वधाया उपक्षेति हितमित्रो
न राजा। पुरः सदः शर्मसदो न वीरा अनवद्या
पतिजुष्टेव नारी ॥४६॥

- ऋ० १.५.१९.३

व्याख्यान– हे प्रियबन्धु विद्वज्जन ! देवो, न = ईश्वर ले सम्पूर्ण जगत् लाई बाहिर तथा भित्र सूर्य ले जस्तै प्रकाशित गरी रहेको छ, यः पृथिवीम् = जो पृथिव्यादि जगत् लाई रचना गरी धारणा गरी रहेछ अरू विश्वधायाः उपक्षेति = विश्वधारक शक्ति लाई पनि निवास दिने र धारणा गर्ने तथा जुन सम्पूर्ण जगत् का परम मित्र अर्थात् जस्तै हितमित्रो न राजा= प्रियमित्रवान् राजा ले आफ्ना प्रजा को यथावत पालना गर्नछ, तेसरी नै हाम्रो पनि पालन कर्ता उही एक हो, अर्को कोहि पनि छैन । पुरः सदः, शर्मसदः= जुन मानिस हरु ईश्वर का पुरः सद छन् अर्थात् ईश्वराभिमुख नै छन् तिनीहरु नै शर्मसदः अर्थात् सदा सुख मा स्थिर रहन्छन् । न बीराः= जसरी छोरा - छोरी आफ्ना बाबु का घर मा आनन्द पूर्वक निवास गर्दछन्, तेसरी नै जो परमात्मा का भक्त छन् ती सदा सुखी नै रहन्छन्, परन्तु जो अनन्यचित्त भएर निराकार, सर्वत्र व्यापक ईश्वर को सत्य श्रद्धा ले भक्ति गर्दछन् जस्तै कि अनवद्या, पतिजुष्टेव, नारी= अत्यन्त उत्तम गुणयुक्त पति को सेवा मा तत्पर पतिव्रता नारी रात - दिन तन, मन, धनले अत्यन्त प्रीति युक्त भएर अनुकूल रहन्छन् तेसै गरी आओ भाइ हो ! ईश्वर को भक्ति गरौं र हामी सबै मिलेर परमात्मा सित परमसुख को लाभ उठाऔं ॥४६॥

## प्रार्थनाविषयः

सा मां सत्योक्तिः परि पातु विश्वतो द्यावां च
यत्र ततनन्नहानि च । विश्वमन्यत्रि विंशते यदेजति
विश्वाहापो विश्वाहोदेति सूर्यः ॥४७॥

- ऋ० ७.८.१२.२

व्याख्यान= हे सर्वाभिरक्षकेश्वर ! सा मा सत्योक्तिः= हजुरको सत्य आज्ञा, जसको हामीले अनुष्ठान गरेका छौं तेसले विश्वतः, परिपातु = हामीलाई सबै संसार संगै पालन कार्य ले युक्त र समस्त दुष्ट कार्यदेखि सदा अलग्ग राखोस्, जसले हामीलाई अधर्म गर्न लाई कहिल्यै पनि इच्छा न होस् द्यावा च= अनि सदा दिव्य सुखसंग युक्त गरी यथावत हाम्रो रक्षा गरोस् । यत्र= जुन दिव्य सृष्टि मा अहानि = सूर्यादिक हरु लाई दिवस आदि बनाउन का निमित्त ततनन् = तपाईंले नै विस्तारे का हुन् यद्वा फैलाए का हुन् त्यहाँ पनि हाम्रो सबै खाले उपद्रव हरु बाट रक्षण गर्नु होला । विश्वमन्यत्= तपाईं भन्दा अन्य [भिन्न] विश्व अर्थात् सम्पूर्ण जगत् जतिखेर हजुरको सामर्थ्य बाट [प्रलय मा] निविशते= प्रवेश गर्दछ [सबै कार्यकारणात्मक हुन्छ] तेतिखेर पनि हजुर ले हाम्रो रक्षा गर्नु होला । यदेजति= जतिखेर यो जगत् हजुरको सामर्थ्य बाट चलित भएर उत्पन्न हुन्छ, तेस बेला पनि सबै पीडा हरु बाट हाम्रो रक्षा गर्नु होला ! विश्वाहापो, विश्वाहा= जुन-जुन विश्व हन्ता तत्व [दुःखदायी तत्व] छन् तिन लाई हजुर ले नष्ट गरिदिनु होस् किनकि हजुर कै सामर्थ्य बाट सकल जगत् को उत्पत्ति, स्थिति र प्रलय हुन्छ, हजुर का समक्ष कुनै राक्षस अर्थात् दुष्टजन ले के गर्न सक्तछ र किनभने तपाईं समस्त जगत् मा उदित [प्रकाशमान] भइ रहनु भएको छ, कृपा गरेर हाम्रा हृदय मा पनि सूर्य झैं प्रकाशित हुनु होस्, जसले हाम्रो अविद्यान्ध कारता सबै नष्ट होस् ॥४७॥

## स्तुतिविषयः

देवो देवानामसि मित्रो अद्भुतो वसुर्वसूनामसि
चारुरध्वरे। शर्मन्त्स्याम तव सप्रथस्तमेऽग्ने सख्ये
मा रिषामा वयं तव ॥४८॥

- ऋ० १.६.३२.१३(१.९४.१३)

व्याख्या= हे मानिसहरु हो ! त्यो परमात्मा कस्तो छ जसको हामीले स्तुति गरौं। हे अग्ने परमेश्वर ! तपाईं देवः देवानामसि= देव हरु अर्थात् परम विद्वान् हरु का पनि देव= परम विद्वान् हुनुहुन्छ तथा उनि हरुलाई परमानन्द दिने हुनुहुन्छ, तथा अद्भुतः= अत्यन्त आश्चर्यरूप मित्र, सर्वसुख कारक र सबैका सखा हुनुहुन्छ, वसुर्वसुमनामसि= पृथिव्यादि वसु हरु लाई पनि वास बसाउने हुनुहुन्छ तथा अध्वरे= ज्ञानादि यज्ञ मा चारुः= अत्यन्त शोभायमान र शोभा प्रदाता हुनुहुन्छ। हे अग्ने= परमात्मन् ! सप्रथस्तमे सख्ये, शर्मन् तव= हजुरको अति विस्तीर्ण, आनन्दस्वरूप सखा हरु का कर्म मा हामी स्याम– स्थिर हौं, जसले सख्येमा रिषामा वयं तव– हामीलाई कहिल्यै दुःख प्राप्त नहोस् र हजुरका अनुग्रह ले हामीहरु कहिल्यै पनि परस्पर अप्रीति युक्त नहौं॥४८॥

## प्रार्थनाविषयः

मा नो वधीरिन्द्र मा परा दा मा नः प्रिया
भोजनानि प्र मोषीः। आण्डा मा नो मघवञ्छक्र
निर्भेन्मा नः पात्रा भेत्सहजानुषाणि ॥४९॥

- ऋ० १.७.१९.८

व्याख्यान हे इन्द्र = परम ऐश्वर्ययुक्त ईश्वर ! मा नो वधीः= हाम्रो वध न गर्नुहोला अर्थात् हामीलाई आफु बाट अलग गरी तल न झार्नु होला। मा परा दाः= तपाईं हामीबाट कहिल्यै अगल न हुनु होला, मा नः प्रिया भोजनानि प्रमोषीः= हाम्रा प्रिय भोग हरु न खोसनु होला

र नखोसाउनु होला । आण्डा मा नः = हाम्रा गर्भ हरु को विदारण नगर्नु होला, अर्थात् मृत्यु मुख मा न पारि दिनु होला हे मघवन्= सर्व शक्तिमन् ! शक्र = समर्थ ! हाम्रा सन्तान हरुको विदारण नगरि दिनु होला । मा नः पात्रा निर्भेत= हाम्रा भोजनादि हेतु प्रयोग हुने सुवर्णादि पात्र हरु हामीबाट अलग नगरि दिनु होला । सहजा नुषाणि= जुन जुन हाम्रा अनुषक्त, स्वभावले अनुकूल मित्र छन् तिनलाई तपाईंले मा भेत्= नष्ट न गर्नु होला, अर्थात् कृपा गरी पूर्वोक्त सबै पदार्थ हरुको यथावत् रक्षा गर्नु हुन प्रार्थना गर्द छौं ॥४९॥

## प्रार्थनाविषयः

मा नो॑ म॒हान्त॑मु॒त मा नो॑ अर्भ॒कं मा न॒ उक्ष॑न्तमु॒त
मा न॑ उक्षि॒तम् । मा नो॑ वधी: पि॒तरं॒ मोत मा॒तरं॒
मा न॑: प्रि॒यास्त॒न्वो॑ रुद्र रीरिष: ॥५०॥

- ऋ० १.८.६.७

व्याख्यान हे रुद्र= दुष्ट विनाशकेश्वर ! तपाईं हामी माथी कृपा गरनुहोस् मा, नो, महान्तम् पितर मा उत मातरम् वधीः= हाम्रा ज्ञानवृद्ध एवं वयोवृद्ध पिता-माता लाई नष्ट न गर्नु होला । अर्थात् इन लाई सुख शान्ति र आनन्द बाट वञ्चित नगर्नु होला उत= तथा मा नो अर्भकम्= स-साना बालक र उक्षन्तम्=वीर्य-सेचन गर्न-समर्थ नौ जवान युवक तथा उक्षितम्=जुन गर्भ मा वीर्य सेचन भइसके को छ, तेसलाई नष्ट न गरिदिनु होला अर्थात् इनको राम्रो सुरक्षा गरिदिनु हुन प्रार्थना छ। प्रियाः तन्वः= हाम्रा पिता, माता र प्रियजन हरु का शरीर लाई मा, रीरिषः= विनाश नगर्नु होला अर्थात् इनको पूर्ण सुरक्षा गर्नुहुन विनम्र प्रार्थना गर्दछौं ॥५०॥

## स्तुतिविषयः

मानस्तोके तनये मा न आयौ मा नो गोषु मा
नो अश्वेषु रीरिषः । वीरान्मा नो रुद्र भामितो
वधीर्हविष्मन्तः सदमित्त्वा हवामहे ॥५१॥

- ऋ० १.८.६.८

व्याख्यान– मा, नः, तोके (तनये)= हे प्रभो ! हाम्रा कनिष्ठ मध्यम र जेष्ठ पुत्र हरु को आयौ= आयु दीर्घ गरिदिनु हुन का लागी विनीत वन्दना गर्दछौं । गोषु= गौ आदि पशु हरु मा, अश्वेषु= घोडा आदि जनावर र इन बाट चलने उत्तम यान हरु मा तथा हाम्रा सेना का वीरान्= शूर- वीर हरु मा हविष्मन्तः= यज्ञ गर्ने गराउने अग्निहोत्री हरु मा भामितः= क्रोधित र मा रीरिषः= कहिल्यै रोषयुक्त न भै दिन प्रार्थना छ। प्रभो हामी हरु सदामित्वा, हवामहे= सदैव हजुरलाई आह्वान गर्दछौं, हे भगवन् ! रुद्र= हे रुद्र परमात्मन् ! हजुरसँग यही प्रार्थना छ हाम्रो र हाम्रा छोरा-छोरी, धन र ऐश्वर्यादि को रक्षा गर्नु होला ॥५१॥

## प्रार्थनाविषयः

उद्गातेव शकुने साम गायसि
ब्रह्मपुत्र इव सवनेषु शंससि ।
वृषेव वाजी शिशुमतीरपीत्या
सर्वतो नः शकुने भद्रमा वद
विश्वतो नः शकुने पुण्यमा वद ॥५२॥

- ऋ० २.८.१२.२

व्याख्यान= हे शकुने = सर्वशक्तिमन्नीश्वर ! उद्गातेव साम गायसि = तपाईं सदा साम को गान गर्नु हुन्छ, तेसैगरी हाम्रा हृदय मा पनि सबै विद्या हरु प्रकाशित गरी सबै विद्या हरु को गान गर्नुहोस्। जस्तै यज्ञ मा महापण्डित ले सामगान गर्दछ । तेसै गरी हजुरले पनि हाम्रो मध्य मा सामादि विद्या को गान गर्नुहोस् अर्थात् प्रकाश

गर्नुहोस् ब्रह्मपुत्र  इव सवनेषु= तपाईं स्वकृपा ले 'सवन्' अर्थात् पदार्थ विद्या हरु को शंससि = प्रशंसा गर्नु हुन्छ, तेसैगरी हामीहरु लाई पनि यथावत् प्रशंसित गर्नुहोस् । जसरी ब्रह्मपुत्रइव= वेद हरु का ज्ञाता ले विज्ञान द्वारा सबै पदार्थ हरु को प्रशंसा गर्दछन् तेसै गरी हजुर ले पनि हामी माथि कृपा गर्नुहोस् । वृषेव वाजी– तपाईं सर्वशक्ति सेवन गर्ने र अन्नादि पदार्थ हरु प्रदान गर्ने तथा महा बलबान् एवं बेगवान् हुनाले 'वाजी' हुनुहुन्छ । जस्तै 'वृषभ' का सरह तपाईं उत्तम गुण र उत्तम पदार्थ हरु को वृष्टिकर्ता हुनुहुन्छ तेसरी नै हामी माथि उत्तम गुण हरु को वर्षा गर्नुहोस् । शिशुमतीः= हामी तपाईंको कृपा ले उत्तम शिशु अर्थात् सन्तान आदि अपीत्य= प्राप्त गरेर सदा सर्वदा हजुरलाई नै भजौं आसर्वतो नः शकुने= हे शकुने ! सर्वसामर्थ्यवान् ईश्वर ! सबैतिर बाट हाम्रा लागी भद्रम्= कल्याणकारी कुरा हरु आ वद= राम्रा प्रकार ले भन्नुहोस् अर्थात् कल्याणकारी नै आज्ञा र कथन गर्नुहोस् जसले अकल्याणकारी कुरासम्म पनि हामीले कहिल्यै नसुनौं । विश्वतो, नः शकुने= हे सबैलाई सुख प्रदान गर्नु हुने ईश्वर ! सम्पूर्ण जगत् का लागी पुण्यम्= धर्मात्मक कर्म गर्ने सम्बन्धी कुरा को  आ वद= उपदेश गर्नु होस्  जसले गर्दा मानिस हरु ले अधर्म गर्ने इच्छा सम्म मात्र पनि न गरून् र सर्वत्र नै सत्य धर्म को प्रवृत्ति होस् ॥५२॥

## प्रार्थनाविषयः

आ॒वद॒ँस्त्वं श॑कुने भ॒द्रमा व॑द
तू॒ष्णीमासी॑नः सुम॒तिं चि॑किद्धि नः ।
यदु॒त्पत॒न् वद॑सि कर्क॒रिर्य॑था
बृ॒हद्व॑देम वि॒दथे॑ सु॒वीरा॑ः ॥५३॥

- ऋ० २.८.१२.३

व्याख्यान– आवदंस्त्वं शकुने= हे शकुने जगदीश्वर ! तपाईं सम्पूर्ण भद्रम्= कल्याण का पनि कल्याण अर्थात् व्यावहारिक सुख भन्दा पनि

माथि मोक्ष-सुख को उपदेश सबै जीव हरु लाई निरन्तर गर्नुहोस्। तूष्णीमासीनः=हे अन्तर्यामिन् ! हजुर हाम्रा हृदय मा सदा स्थिर भइ मौन रूप ले नै सुमतिम्= सर्वोत्तम ज्ञान दिनुहोस् । चिकिद्धि नः= निज कृपा ले हामीलाई आफु बस्ने घर नै बनाउनु होस् र हजुर को परम विद्या लाई हामी प्राप्त गरौं । यदुत्पतन्= उत्तम व्यवहार मा पुऱ्याउँदै तपाईंले यथा= जुनप्रकार ले कर्करिर्वदसि= कर्तव्य, कर्म र धर्म लाई नै अत्यन्त पुरुषार्थ पूर्वक पालन गर्नु र अकर्तव्य दुष्ट कर्म नगर्नु भन्ने उपदेश दिनुभएको छ। अर्थात् यथायोग्य उद्यम गर्न कहिल्यै न छोड्नु भन्ने दिव्य उपदेश गर्नुभएको छ । जस्तै बृहद्वदेम विदथे= विज्ञान आदि यज्ञमा वा धर्म युक्त युद्ध हरु मा सुवीराः= अत्यन्त शूरवीर भएर बृहत्= सबैभन्दा ठूलो हजुर जुन परब्रह्म हुनुहुन्छ तेस्ता तपाईंको वदेम= स्तुति गरौं तपाईंको बारे मा उपदेश गरौं, तपाईंको प्रार्थना र उपासना गरौं तथा तपाईंको यो विशाल, एवं अखण्ड साम्राज्य को बखान गरौं र सबै मानिस हरु लाई सर्वदा हित का कुरा भनौं, सुनौं र हजुरका अनुग्रह ले परमानन्द को भोग गरौं ॥५३॥

ओम् महाराजाधिराजाय परमात्मने नमो नमः ॥

इति श्रीमत्परमहंसपरिव्राजकाचार्याणां महाविदुषां
श्रीयुत विरजानन्दसरस्वतीस्वामिनां शिष्येण
दयानन्दसरस्वतीस्वामिना विरचित आर्य्याभिविनये
प्रथमः प्रकाशः पूर्त्तिमागमत् ।

॥समाप्तोऽयं प्रथमः प्रकाशः ॥

॥ओ३म्॥

॥ तत्सत्परमात्मने नमः ॥

अथ द्वितीयः प्रकाशः

ओ३म् सह नाववतु सह नौ भुनक्तु । सह वीर्य्यं करवावहै । तेजस्विनावधीतमस्तु मा विद्विषावहै ॥ ओ३म् शान्तिः शान्तिः शान्तिः ॥१॥

तैत्तिरीयारण्यके ब्रह्मानन्दवल्ली प्रपा.१०

प्रथमानुवाकः १॥

व्याख्यान – हे सहनशीलेश्वर ! सह नौ अवतु=तपाईं र हामीहरु परस्पर प्रसन्नता साथ रक्षक हौं । तपाईंका कृपा ले हामीहरु सदैव तपाईंको नै स्तुति, प्रार्थना र उपासना गरौं तथा तपाईंलाई नै पिता, माता, बन्धु, राजा, स्वामी, सहायक,सुखद, सुहृद, र परमगुरु आदि भनेर जानौं, क्षणमात्र पनि तपाईं लाई बिर्सिएर न र हौं । तपाईंका तुल्य वा धेर कसैलाई पनि कहिल्यै न सम्झौं । तपाईंका अनुग्रह ले हामी हरु सबै जना परस्पर प्रीतिमान् , रक्षक, सहायक र परमपुरुषार्थी हौं, एक अर्काको दुःख देख्न न सकौं, स्वदेशस्थ सबै मानिस हरु लाई परस्पर अत्यन्त निर्वैर, प्रीतिमान् र पाखण्ड रहित बनाऔं सह,नौ,भुनक्तु= तथा तपाईं को कृपा ले हामीहरु परस्पर परमानन्द को भोग गरौं ।

हामी हरु एक अर्का को हित भावना ले आनन्द भोगौं, प्रभो ! तपाईंले हामीलाई आफ्नो अनन्त परमानन्द को भागी बनाई दिनुहोस्, तेस आनन्दबाट हामी हरु लाई क्षण मात्र पनि अलग न राख्नु होस् ।

सह, वीर्यं करवावहै = तपाईंको सहयोग ले परमवीर्य जुन सत्य विद्यादि छन् तिनलाई परस्पर परमपुषार्थ ले प्राप्त गरौं । तेजस्वि नावधीतमस्तु = हे अनन्त विद्यामय भगवन् ! [तपाईंको कृपादृष्टिले हाम्रो पठन-पाठन परम विद्यायुक्त होस् तथा संसारमा हामी हरु सबै सित प्रचुर प्रकाशित हौं र अन्योन्य प्रीतिले परमवीर्य तथा पराक्रमले निष्कण्टक चक्रवर्ती राज्य भोगौं ।

हामी भित्र सबै नीतिमान् सज्जन पुरुष हुन् । र तपाईंले हामी माथी अत्यन्त कृपा गर्नु होला, जसले हामीहरु नाना भाँतिका पाखण्ड, असत्य र वेद विरुद्ध मत हरु लाई चाँडै छोडेर एक सत्य सनातनमतस्थ हौं । जसले गर्दा सबै विद्वेष को मूल जुन पाखण्ड मत छ, त्यो सबै सद्यः (छिटै) प्रलयमा प्राप्त होस् अरू मा विद्विष वहै = हे जगदीश्वर ! तपाईं को सामर्थ्यद्वारा हामीमा परस्पर विद्वेष, 'विरोध' अर्थात्-अप्रीती न रहोस् -तथा हामीहरु कहिले पनि आपस मा विद्वेष, विरोध नगरौं, तर सबै जना तन, मन, धन र विद्या लाई एक अर्काको सुख र उपकार मा परम प्रीति ले लगाऔं ।

ओ३म् शान्तिः शान्तिः शान्तिः= हे भगवन् ! जगत् मा तीन प्रकार का सन्ताप छन् पहिलो- 'आध्यात्मिक [शारीरिक] जुन ज्वरादि को पीडा ले हुन्छ, दोस्रो-'आधिभौतिक जुन शत्रु, सर्प, व्याघ्र र चोर आदि को सन्ताप ले हुन्छ अरू तेस्रो-'आधिभौतिक जुन मन, इन्द्रिय, आगो, हुरी-बतास, अतिवृष्टि, अनावृष्टि अति शीत र अति गर्मी इत्यादि बाट हुन्छ । हे कृपा सागर ! तपाईंले ई तीनै थरीका ताप हरु लाई चाँडै पर गरि दिनु होस्, जसले हामी अत्यन्तै आनन्दमा र तपाईं को उपासना मा सदा उद्यत् रहौं ।

हे विश्वगुरो ! मँलाई असत् [मिथ्या] र अनित्य पदार्थ तथा असत काम बाट छोडाएर सत्य तथा नित्य पदार्थ तथा श्रेष्ठ व्यवहार मा स्थिर गर। हे जगन्मङ्गलमय ! [सर्व दुःखे भ्यो मोचयित्वा सर्व सुखानि प्रापय] मँ लाई सबै दुःख हरु बाट छोडाएर सबै सुख हरु मा प्राप्त गराऊ। हे प्रजापते ! सुप्रजया पशुभि ब्रह्मवर्चसेन, परमैश्वर्येण संयोजय= हे प्रजापते ! मँलाई उत्तम प्रजा-पुत्रादि, हात्ति-घोडा-गाई-भैंसी आदि उत्तम पशु, सर्वोत्कृष्ट विद्या र चक्रवर्ती राज्यादि परमैश्वर्य जुन स्थिर परमसुखकारक छन तिन लाई चाँडै प्राप्त गराउनु होस्। हे परम वैद्य ! [सर्वरोगात्पृथक्कृत्य नैरोग्यं देहि] मँलाई सबै रोग हरु बाट सर्वथा छोडाएर परमनैरोग्यता दिनुहोस्। हे महाराजा धिराज ! हे सर्वान्तर्यार्निन् सदुप देशक शुद्धिप्रद !

[मनसा, वाचा, कर्मणा अज्ञानेन प्रमादेन वा यद्यत्पापं कृतं मया तत्तत्सर्वं कृपया क्षमस्व, ज्ञानपूर्वक पापकरणान्निवर्तयतु माम्] मनले, वाणी ले तथा कर्मले अज्ञान वा प्रमादले जुन-जुन पाप गरिएको छ किंवा गर्ने मनसाय छ भने, ती-ती मेरा पाप हरु क्षमा गरि दिनुहोस् । ज्ञान पूर्वक पाप कर्म गर्न बाट मँलाई रोकि दिनुहोस् जसले मँ शुद्ध भएर तपाईंको सेवा मा स्थिर हूँ । - [हे न्यायाधीश ! कुकाम, कुलोभ, कुमोह, भय, शोक, आलस्य, ईर्ष्या, द्वेष, प्रमाद, विषयतृष्णा नैष्ठुर्य, अभिमान, दुष्टभाव, अविद्याभ्यो, निवारय, एतेभ्यः, विरुद्धेषु उत्तमेषु गुणेषु संस्थापय माम्] हे ईश्वर ! कुकाम, कुलोभादि पूर्वोक्त[१] दुष्ट दोष हरु लाई स्व कृपा ले छोडाएर श्रेष्ठ काम हरु मा मँलाई यथावत स्थिर गर ! मँ अत्यन्त दीन[२] भएर यही माग्दछु कि मँ तपाईं र तपाईं को आज्ञा देखि भिन्न पदार्थ मा कहिले प्रीति नगरूँ ! हे प्राणपते, प्राणप्रिय, प्राणपितः, प्राणाधार, प्राणजीवन , स्वराज्यप्रद ! मेरा प्राणपति आदि तपाईं नै हुनुहुन्छ, मेरो सहायक तपाईं बिना अरू कोहि छैन । हे राजाधिराज ! जस्तो सत्य न्याययुक्त, अखण्डित तपाईंको राज्य छ त्यस्तै हाम्रो न्याय राज्य पनि तपाईं तिर बाट स्थिर होस् । तपाईंले आफ्नो कृपाकटाक्षले हामीलाई चाँडै आफ्नो राज्य को अधिकारी किङ्कर गराउनुहोस् । हे न्याय प्रिय ! हामीलाई पनि यथावत् न्यायप्रिय गराउनु होस् ! हे धर्माधीश ! हामीलाई पनि धर्ममा स्थिर राख्नु होस् । हे करुणामय पितः ! जस्तै माता पिता ले आफ्ना सन्तान को पालन गर्दछन्, तेसरी नै तपाईंले हाम्रो पालन गर्नु होस् ॥१॥

---

१. पूर्वोक्त वाक्य को तात्पर्य हो-कुमोह, भय, शोक, आलस्य, ईर्ष्या, द्वेष, प्रमाद, विषयतृष्णा, नैष्ठुर्य,अभिमान दुष्टभाव,अविद्या ।

२. अत्यन्त विनम्र ।

## स्तुतीविषय :

स पर्यगाच्छुक्रमकायमव्रणमस्नाविरꣳ शुद्धमपापविद्धम्। कविर्मनीषी परिभूः स्वयम्भूर्याथातथ्यतोऽर्थान् व्यदधाच्छाश्वतीभ्यः समाभ्यः ॥२॥

- यजुर्वेद। अध्याय ४०। मन्त्र ८

व्याख्यान–सः पर्यगात् = त्यो परमात्मा आकाश जस्तै सबै ठाऊँ मा परिपूर्ण [व्यापक] छ शुक्रम्= सम्पूर्ण जगत् को कर्ता उही हो। अकायम्= र त्यो कहिल्यै शरीर धारण [अवतार] गर्दैन, त्यो अखण्ड, अनन्त र निर्विकार हुना ले कहिल्यै पनि देह धारण गर्दैन। ऊ भन्दा पहिले को कुनै पदार्थ छैन, एस कारण ईश्वर को शरीर धारण कहिल्यै सिद्ध हुनसक्तैन। अव्रणम् = ऊ अखण्ड, एकरस, अच्छेद्य, अभेद्य, निष्कम्प र अचल छ, एसकारण उसमा अंशांसि भाव पनि छैन। किनकि उसमा कुनै प्रकार को पनि छिद्र हुन सक्तैन अस्नाविरम् = नाडी आदि को प्रतिबन्ध [निरोध] पनि उसको हुन सक्तैन। अतिनै सूक्ष्म हुनाले ईश्वर को कुनै अवतरण हुन सक्तैन। शुद्धम्= त्यो परमात्मा सदैव निर्मल, अविद्यादि क्लेश, जन्म, मरण, हर्ष, शोक, क्षुधा, तृषादि दोषोपाधि हरु देखि रहित छ। शुद्ध को उपासना गर्ने शुद्ध नै हुन्छ। र मलिन को उपासना गर्ने मलिन नै हुन्छ। अपापविद्धम्= परमात्मा कहिल्यै अन्याय गर्दैन किन भने ऊ सदैव न्यायकारी नै हो। कविः=त्रैकालज्ञ [सर्ववित्] महाविद्वान्, जसका विद्या को अन्त कसैले कहिल्यै लिन सक्तैन। मनीषी= समस्त जीव हरु को मन [विज्ञान] को साक्षी सबैको मन लाई दमन गर्ने। परिभूः= -सबै दिशा हरु मा र सबै ठाँउ मा परिपूर्ण भई रहेछ, सबैमाथि विराजमान छ। स्वयंभूः=जसको आदिकारण-माता-पिता, उत्पादक कोहि छैन, किन्तु ऊ नै सबैको आदिकारण हो। याथातथ्यतोर्थान् व्यदधाच्छाश्वतीभ्यः समाभ्यः= तेस ईश्वर ले आफ्ना प्रजा लाई यथावत् सत्य, सत्यविद्या जुन चार वेद

हुन् तिनको सबै मानिस हरु लाई परम हितार्थ उपदेश गरेको छ, त्यो हाम्रो दयामय पिता परमेश्वरले बडो कृपा गरी अविद्यान्धकार को नाशक वेदविद्यारूप सूर्य प्रकाशित गरेको छ अरू सबैको आदिकारण परमात्मा हो, यस्तो अवश्य मान्नु पर्दछ, एवं विद्यापुस्तक को पनि आदिकारण ईश्वर लाई नै निश्चित मान्नु पर्दछ, विद्या को उपदेश ईश्वर ले आफ्नो निज कृपा ले गरेको छ। किनकि हामी हरु का लागी उसले सबै पदार्थ हरु दान गरेको हो भने विद्या को दान किन गर्दैन थ्यो? सर्वोत्कृष्ट विद्या-पदार्थ को दान परमात्मा ले अवश्य गरेको हो अरू वेद बाहेक अर्को कुनै पुस्तक संसार मा ईश्वरोक्त छैन। जसरी पूर्ण विद्यावान् र न्यायकारी ईश्वर छ। तेसरी नै वेदपुस्तक पनि हुन्। अन्य कुनै पुस्तक ईश्वरकृत, वेदतुल्य वा अधिक छैनन्।

यस विषय मा विस्तृत विचार मँद्वारा लिखित ग्रन्थ
"सत्यार्थप्रकाश" मा हेर्नु होला ॥ २ ॥

## स्तुति विषयः

दृते दृꣳ ह मा मित्रस्य मा चक्षुषा सर्वाणि
भूतानि समीक्षन्ताम्। मित्रस्याहं चक्षुषा सर्वाणि
भूतानि समीक्षे। मित्रस्य चक्षुषा समीक्षामहे ॥ ३॥

- यजुः ३६।१८

व्याख्यान– हे अनन्तबल महावीर ईश्वर! दृते = हे दुष्टस्वभावनाशक! विदीर्णकर्म अर्थात् विज्ञानादि शुभगुण हरु नाश गर्ने मेरो स्वभाव छ भने मँलाई बाँकी नराख्नु होला। [स्तिथ नगर्नु होला] किन्तु तेसबाट मेरा अन्तरात्मादि लाई उत्थान गरी विद्या, सत्य, धर्मादि शुभ गुण हरु मा सदैव स्व कृपासामर्थ्य ले स्थित गर्नु होस्। दृꣳह मा = हे परमैश्वर्यवन् भगवन्! धर्मार्थकाममोक्षादि तथा विद्या-विज्ञानादि दान द्वारा मँलाई अत्यन्त अग्रगति दिनु होला। मित्रस्येत्यादि = हे सर्वसुहृदीश्वर सर्वान्तर्यामिन्! समस्त भूत=प्राणिमात्र मँलाई यथावत् मित्र का दृष्टि ले हेरून्। सबै

मेरा मित्र हुन् । कोहि पनि मँसंग किञ्चिन्मात्र पनि वैरदृष्टि न गरून् । मित्रस्याहं चेत्यादि= हे परमात्मन् ! तपाईंको कृपा ले मँ पनि निर्वैर भएर सबै भूत - प्राणी र अप्राणी चराचर जगत् लाई मित्र का दृष्टि ले स्वात्म र स्वप्राणवत् प्रिय ठानूँ, अर्थात् मित्रस्य चक्षुषेत्यादि= पक्षपात छोडेर सम्पूर्ण जीव = देहधारीमात्र अत्यन्त प्रेम ले परस्पर व्यवहार गरून् । अन्याय युक्त भएर हामी कसैमाथि कहिल्यै पनि व्यवहार न गरौं । परमात्मा ले सबै मानिस हरु लाई एस परम धर्म को उपदेश गर्नु भएको हो, सबैलाई यही कुरा मान्य हुन योग्य छ ॥३॥

## स्तुतिविषयः

तदेवाग्निस्तदादित्यस्तद्वायुस्तदु चन्द्रमाः ।
तदेव शुक्रं तद्ब्रह्म ता ऽ आपः स प्रजापतिः ॥४॥

- यजुः ३२ । १

व्याख्यान्– जुन समस्त जगत् को कारण एक परमेश्वर छ, उसैको नाम अग्नि हो, (ब्रह्मयग्निः= शतपथे[1]) सर्वोत्तम, ज्ञानस्वरूप र जान्न योग्य, प्रापणीयस्वरूप र पूज्यतम इत्यादि "अग्नि" शब्द का अर्थ छन्- आदित्यो वै ब्रह्म[2], वायुर्वै ब्रह्म,चन्द्रमा वै ब्रह्म[3], शुक्रं हि ब्रह्म, सर्वजगत्कर्तृ ब्रह्म वै बृहत्, आपो वै ब्रह्मे[4] त्यादि = शतपथ तथा ऐतरेय ब्राह्मण का प्रमाण हुन् । तदादित्यः= जसको कहिल्यै नाश, हुँदैन र स्वप्रकाशस्वरूप छ, एस कारण परमात्मा को नाम 'आदित्य हो। तद्वायुः= सबै जगत् लाई धारण गर्ने, अनन्त बलवान् प्राण भन्दा पनि जुन प्रियस्वरूप छ यस कारण ईश्वर को नाम 'वायु हो । पूर्वोक्त प्रमाण बाट तदु चन्द्रमाः= जो आनन्दस्वरूप र स्व-सेवक हरु लाई परमानन्द दिने हो, एसो हुँदा पूर्वोक्त प्रकार ले परमात्मा लाई चन्द्रमा भनेर जान्नु पर्दछ । तदेव शुक्रम्= उहीचेतनस्वरूप ब्रह्म सबै

१. शत० १।५।१।११॥ २ जै०उ० ३।४।९।, शत० ४।७।१।१५॥
३. ऐत० २।४१। ४. शत० ८।२।३।१३ आपो वै प्रजायतिः ॥

जगत् को कर्ता हो । तद् ब्रह्मः= एस कारण त्यो ब्रह्म अनन्त, चेतन र सबै भन्दा ठूलो हो र धर्मात्मा स्व-भक्त हरु लाई अत्यन्त सुख दिने र विद्यादि सद्गुण हरु बढाउन समर्थ हो । ता आपः= उसैलाई सर्वज्ञ, चेतन, सर्वत्र व्याप्त हुनका कारण आपः नाउँले जान्नु पर्दछ । सःप्रजापतिः= उही सम्पूर्ण जगत् को पति (स्वामी) एवं पालन कर्ता हो । अर्को कोही छैन, उसैलाई हामीले ईष्टदेव तथा पालक मानौं, अरूलाई होईन् ॥४॥

## प्रार्थनाविषयः

ऋचं वाचं प्र पंद्ये मनो यजुः प्र पंद्ये सामं प्राणं
प्रपंद्ये चक्षुः श्रोत्रं प्रपंद्ये । वागोजंः सहौजो
मयिं प्राणापानौ ॥५॥

- यजुः ३६ । १० ॥

व्याख्यान–हे करुणाकर परमात्मन् ! हजुरको कृपाले मँ ऋचं वाचं प्रपद्ये = ऋग्वेदादि ज्ञान युक्त [श्रवणयुक्त] भएर तेसको वक्ता बनूँ तथा नः यजुः प्रपद्येः = यजुर्वेद को अभिप्राय अर्थसहित सत्यार्थमननयुक्त मन प्राप्त गरूँ । एसरि नै साम प्राणं प्रपद्ये= सामवेदार्थनिश्चय निदिध्यासनसहित प्राण लाई सदैव प्राप्त गरूँ । चक्षुः श्रोत्रं प्रपद्येः= मँ वेदानुकूल श्रवणशक्ति बाट सदा अथर्ववेद को चिन्तन एवं मनन् गरूँ । वागोजः= मँलाई वाग्बल, वक्तृत्वबल र मनोविज्ञानबल तपाईंले दिनु होला । अन्तर्यामी तपाईंको कृपा ले मँ ई सबैलाई यथावत् प्राप्त गरूँ । सहौजः= शरीरबल, नैरोग्य, दृढत्वादि गुण हरु लाई हजुर का अनुग्रह ले सदैव प्राप्त गँरू । मयि,प्राणापानौः= हे सर्व जगज्जीवनाधार ! प्राण [जसबाट ऊर्ध्वचेष्टा प्राप्त हुन्छ] तथा अपान [जसबाट निम्न चेष्टा प्राप्त हुन्छ ] ई दुवै मेरा शरिर का सबै ईन्द्रिय र सबै धातुहरुको शुद्धिगर्ने तथा नैरोग्य, बल, पुष्टि,सरलगति गर्ने स्थिर, आयुरवर्धक र मर्मस्थल हरु को रक्षा कारी

हुन् । तपाईंको कृपा ले तिनका अनुकूल प्राणादि प्राप्त गरी हे ईश्वर ! सदैव सुखी भई तपाईंको आज्ञा र उपासना मा तत्पर रहूँ ॥५॥

## स्तुतिविषयः

स नो बन्धुर्जनिता स विधाता धामानि वेद
भुवनानि विश्वा । यत्र देवाऽअमृतमानशानास्तृतीये
धामन्नध्यैरयन्त ॥६॥

- यजुः ०३२ । १० ॥

व्याख्या – त्यो परमेश्वर हाम्रो बन्धुः= दुःख नाशक एवं सहायक हो तथा जनिता= सबै जगत् तथा हामीलाई पालन गर्ने पिता तथा विधाता= हामी हरु को सम्पूर्ण काम सिद्धि गर्ने उही हो । सम्पूर्ण जगत् को पनि विधाता [रचने र धारण गर्ने] एक मात्र परमात्मा नै हो । अर्को कोही छैन । धामानि वेद भुवनानि विश्वा= सबै धाम भुवनानि अर्थात् अनेक लोक-लोकान्तर हरु लाई रचेर अनन्त सर्वज्ञता द्वारा यथार्थ जान्द छ, त्यो परमेश्वर को हो भने 'देव अर्थात्, विद्वान् हरु [विद्वाꣳसो हि देवाः शतपथ ब्रा[1]] अमृत ,मरणादि दुःख रहित मोक्षपद मा सबै दुःख हरु बाट छुटि, सर्वव्यापी, पूर्णानन्दस्वरूप परमात्मा लाई प्राप्त गरी सदैव परमानन्द मा रहन्छन् । तृतीये= पहिलो -स्थूल जगत् [पृथिव्यादि] दोस्रो -सूक्ष्म [आदि कारण] तेस्रो -सर्वदोष रहित अनन्तानन्दस्वरूप परब्रह्म तेस धाम मा अध्यैरयन्त=धर्मात्माजन र विद्वान् हरु स्वच्छन्द [स्वेच्छा पूर्वक] रहन्छन् । समस्त बाधा हरु बाट मुक्त भई विज्ञानवान्=शुद्ध भएर देश, काल एवं वस्तु का परिच्छेद देखि रहित भएर सर्वगत धामन्=आधार स्वरूप परमात्मा मा सदा रहन्छन् । तेस कारण ले जन्म - मरणादि दुःख सागर मा कहिल्यै पनि पर्दैनन् ॥६॥

१ शतपथ ब्रा - ३।७।३।१०

## प्रार्थनाविषयः

यतोयतः समीहसे ततो नोऽअभयं कुरु ।
शं नः कुरु प्रजाभ्योऽभयं नः पशुभ्यः ॥७॥

- यजु० ३६.२२

व्याख्यान– हे महेश्वर दयालो ! यतःयतः= जुन-जुन देश बाट तपाईं समीहसेः= सम्यक् चेष्टा गर्नु हुन्छ ततः= तेस -तेस देश बाट नः= हामीलाई अभय गर्नु होला अर्थात् जहाँ-जहाँ बाट डर प्राप्त हुन लाग्छ, तेस-तेस स्थान बाट हामीलाई सर्वथा अभयं कुरु= [भयरहित] गर्नु होस् तथा प्रजाभ्यः नः,शम्, कुरुः= प्रजा बाट हामीलाई सुखी गर्नु होस् । हाम्रा प्रजा सदादिन सुखी रहुन्, भय प्रदायक कहिल्यै न हुन् तथा पशुभ्यः नः अभयम्ः= पशु हरु बाट पनि हामीलाई अभय गर्नु होला । किंच हामीहरु लाई हजुर को कृपा ले कुनै प्रकार को भय कसै संग नहोस् । जसले गर्दा हामी सदैव निर्भय भएर परमानन्द भोग गरौं र निरन्तर हजुर को आज्ञा मानौ तथा हजुर को भक्ति गरौं ॥७॥

## स्तुतिविषयः

वेदाहमेतं पुरुषं महान्तमादित्यवर्णं तमसः परस्तात् ।
तमेव विदित्वाति मृत्युमेति नान्यः पन्था
विद्यतेऽयनाय ॥८॥

- यजुः ०३१.१८

व्याख्यान– सहस्रषशीर्षादि विशेषणोक्त पुरुष सर्वत्र परिपूर्ण छ । [पूर्णत्वात्परिशयनाद्वा पुरुष इति निरुक्तोक्तेः]वेदाहमेतं पुरुषम्ः= तेस पुरुष लाई मँ जान्द छु, अर्थात् सबै मानिस हरु लाई उचित छ कि तेस परमात्मा लाई अवश्य जानून्, उसलाई कहिल्यै न विर्सिऊन्, अन्य कसैलाई ईश्वर न मानून् । ऊ कस्तो छ भने महान्तम्ः= ठूला भन्दा पनि ठूलो, ऊ भन्दा ठूलो वा ऊ समान कोही पनि छैन । आदित्य वर्णम्ः= आदित्य को रचनाकार र प्रकाशक उहि एक

परमात्मा हो तथा त्यो सदा प्रकाशस्वरूप नै हो, किंच तमसः परस्तात्= 'तम' जुन अन्धकार र अविद्यादोष छ तेसबाट रहित नै छ, तथा स्वभक्त, धर्मात्मा र सत्यप्रेमी हरु लाई पनि सद्यः अविद्यादि दोष रहित गर्ने उही परमात्मा हो । विद्वान् हरु को एस्तो निश्चय छ कि परब्रह्म को ज्ञान र उसको कृपा बिना कुनै - जीव कहिल्यै सुखी हुन सक्तैन । तमेवविदित्वेत्यादि= तेस परमात्मा लाई जानेर नै जीव ले मृत्यु लाई उल्लंघन वा पार गर्न सक्त छ, अन्यथा सक्तैन । किन भने नाऽन्यः, पन्था, विद्यतेयनाय= परमेश्वर को भक्ति र उसको ज्ञानविना मुक्ति को अर्को कुनै बाटो छैन, यस्तो परमेश्वर को दृढ आज्ञा छ। सबै मानिस हरु ले एसैमा प्रतिबद्ध हुनु पर्द छ र सबै प्रकार का पाखण्ड एवं जन्जाल हरु लाई अवश्य छोडिदिनु पर्द छ ।

## प्रार्थनाविषयः

तेजोऽसि तेजो मयि धेहि वीर्यमसि वीर्यं मयि धेहि
बलमसि बलं मयि धेह्योजोऽस्योजो मयि धेहि
मन्युरसि मन्युं मयि धेहि सहोऽसि
सहो मयि धेहि ॥९॥

- यजुः० १९। ९ ॥

व्याख्यान– हे स्वप्रकाश ! अनन्ततेज ! तपाईं तेजःअसि = अविद्यान्धकार देखि रहित हुनुहुन्छ, किंच सत्यविज्ञान, तेजःस्वरूप हुनुहुन्छ । तेजोममिधेहि=तपाईंलेकृपादृिष्टगरीमँमात्यहीतेजधारणागरिदिनुहोस्। जसले गर्दा मँ तेज हीन, दीन र भीरु कहीं कतै पनि न हूँ। हे अनन्त वीर्य परमात्मन् ! तपाईं वीर्यं असि = वीर्य स्वरूप हुनुहुन्छ वीर्यंम् मयि धेहि = मँमा पनि शक्ति को स्थापना गर्नु होस् । हे महाबलशालिन् । बलं असिः = तपाईं सर्वोत्तम बलयुक्त हुनु हन्छ, बलंमयिधेहिः=मँमापनिसर्वोत्तमबलस्थिरगरिदिनुहोस्हेअन्तरपराक्रम !तपाईंओजःअसि=पराक्रमस्वरूपहुनुहुन्छ।अतःओजोमयिधेहि=मँमा पनि तेही पराक्रम सदैव धारण गराउनु होस् । हे दुष्टानामुपरि

क्रोधकृत् ! मन्युः असि = तपाईं दुष्ट हरु माथि क्रोधकर्ता हुनुहुन्छ, मन्युं मयि धेहिः= तपाईं मलाई पनि दुष्ट हरु माथि क्रोधगर्ने बनाउनु होस्। हे अनन्तसहन स्वरूप ! सह : असि= हजुर, अत्यन्त सहनशील हुनुहुन्छ, सहः मयि धेहि= मँमा पनि हजुर ले सहने सामर्थ्य धारण गराउनु होस्, अर्थात् शरीर, इन्द्रिय, मन र आत्मा को तेज आदि गुण मँबाट कहिल्यै टाढा न हुन् जसले गर्दा मँ तपाईंको भक्ति को स्थिर अनुष्ठान गरूँ र हजुर का अनुग्रह ले संसार मा पनि सदा सुखी रहूँ ॥९॥

## स्तुतिविषयः

परीत्यं भूतानिं परीत्यं लोकान् परीत्य
सर्वाः प्रदिशो दिशंश्च ।
उपस्थायं प्रथमजामृतस्यात्मनात्मानंमभि
सं विंवेश ॥ १० ॥

- यजुः० ३२ । ११॥

व्याख्यान – त्यो परमेश्वर परीत्य भूतानि= समस्त भूत=जीव हरु मा र परीत्य लोकान्= आकाश र प्रकृति देखि लिएर पृथिवी पर्यन्त सम्पूर्ण संसार मा व्याप्त भएर परिपूर्णरूप मा टम्म [भरि] छ तथा सर्वादिशः=सबै लोक, पूर्वादि सबै दिशा र प्रदिशः परीत्य= ऐशान्यादि उपदिशा, माथि-तल अर्थात् एक कण पनि उ बिना रिक्त [खालि] छैन प्रथमजाम् = प्रथम उत्पन्न जीव सारा संसार लाई नै बुझ्नु पर्दछ, अतः जीवादि ले आत्मना= आफ्नो आत्मा ले अत्यन्त सत्याचरण, विद्या, श्रद्धा र भक्ति ले ऋतस्य = यथार्थ सत्यस्वरूप परमात्मा लाई उपस्थाय= यथावत जानेर,उपस्थित [निकट प्राप्त] अभिसंविवेश= अभिमुख भई आत्मानम्ः= तेसमा प्रविष्ट भई, अर्थात्-परमानन्दस्वरूप परमात्मा मा प्रवेश गरी, सम्पूर्ण दुःख हरु बाट छुटेर सदैव उसै परमानन्द मा रहन्छ ॥१०॥

## प्रार्थनाविषयः

भग॒ प्रणे॑त॒र्भग॒ सत्य॑राधो॒ भग॒मां धियमुद॑वा॒ दद॑न्नः।
भग॒ प्र नो॑ जनय॒ गोभि॒रश्वै॒र्भग॒
प्र नृभि॑र्नृ॒वन्त॑ः स्याम ॥११॥

- यजुः० ३४ । ३६ ॥

व्याख्यान – हे भगवन् ! परमैश्वरर्यवन् ! भग= ऐश्वर्य दाता संसार मा वा परमार्थ मा तपाईं नै हुनुहुन्छ तथा भग प्रणेतः=तपाईं कै स्वाधीन सकल ऐश्वर्य छ, अन्य कसैको अधीन छैन, तपाईं जसलाई चाहनु हुन्छ तेसलाई ऐश्वर्य दिनुहुन्छ, तपाईंले कृपा गरी हाम्रो दारिद्रय छेदन गरी हामीलाई परम ऐश्वर्यवान् बनाई दिनु होस् किनकि ऐश्वर्य का प्रेरक तपाईं नै हुनुहुन्छ। हे सत्यराधः= भगवन् ! सत्य ऐश्वर्य को सिद्धिकर्ता तपाईं नै हुनुहुन्छ एसर्थ तपाईंले इमाम् भगम् नः ददत्= हामीलाई नित्य ऐश्वर्य दिनु होस्-जुन 'मोक्ष': कहलाउँछ तेस सत्य ऐश्वर्य का दाता तपाईं भिन्न अर्को कोही पनि छैन। हे सत्यभग ! तपाईंले हामीलाई पूर्ण ऐश्वर्य र सर्वोत्तम बुद्धि दिनु होस्। जसले हामीहरु तपाईंका गुण हरु को ग्रहण, तपाईंका आज्ञा हरु को पालन र ज्ञान मा यथावत प्राप्त हौं। हामीलाई सत्यबुद्धि ,सत्यकर्म र सत्यगुण हरु उदव– [उद्गमय प्रापय] प्राप्त गराउनु होस् । जसले हामीहरु सूक्ष्म भन्दा पनि सूक्ष्म पदार्थ हरु लाई जानौं । भग प्रनो जनय= हे सर्व ऐश्वर्य उत्पादक ! हाम्रा लागी राम्रो गरी ऐश्वर्य उत्पन्न गरिदिनु होस् । गोभिः अश्वैः= सर्वोत्तम गोवंश घोडा र मानिस हरु ले सहित अनुत्तम=सर्वोत्तम ऐश्वर्य हामीलाई सदा का लागि दिनु होस्। हे सर्वशक्तिमन् ! तपाईंको कृपाकटाक्षले हामीहरु सदादिन नृभिः नृवन्तः प्र स्याम= असल-असल पुरुष, स्त्री, सन्तान र भृत्य हरु ले सु-सम्पन्न हौं । तपाई संग हाम्रो यही विशेष प्रार्थना छ, कि हामी भित्र कुनै मानिस दुष्ट र मूर्ख न रहूँन् तथा न उत्पन्न हुन्, जसले हाम्रो सर्वत्र सत्कीर्ति होस् अरू कहिल्यै पनि निन्दा न होस् ॥११॥

## स्तुतिविषयः

तदेजति तन्नैजति तद् दूरे तद्वन्तिके ।
तदन्तरस्य सर्वस्य तदु सर्वस्यास्य बाह्यतः ॥१२॥

- यजु० ४०।५

व्याख्यान –तद् ब्रह्म एजति = तद् त्यो ब्रह्म परमात्मा ले सबै जगत् लाई आफ्नो-आफ्नो यथायोग्य चाल मा चलाई रहेछ, एसमा अविद्वान् हरु ईश्वर माथि पनि आरोप लाउँछन् कि ऊ पनि चलायमान होला, परन्तु ऊ सबैमा पूर्ण छ । कहिले पनि चलायमान हुँदैन । अत एव तन्नैजति= [यो प्रमाण छ] स्वतः त्यो परमात्मा कहिल्यै पनि गति गर्दैन, एकरस निश्चल भएर भरिएको छ, विद्वान् हरु एसै गरी ब्रह्म लाई जान्द छन् । तद् दूरे= अधर्मात्मा, अविद्वान्, विचार शून्य, अजितेन्द्रिय, ईश्वर भक्ति रहित इत्यादि दोषयुक्त मानिस हरु भन्दा त्यो ईश्वर धेरै टाढा छ अर्थात् तिनि हरु कोटि-कोटि वर्षसम्म पनि उसलाई प्राप्त हुँदैनन् । तिनिहरु तब सम्म जन्म मरणादि दुःख सागर मा भट्कि रहन्छन् जब सम्म उसलाई जान्दैनन् । तद्वन्तिके= सत्यवादी, सत्यकारी, सत्यमानी, जितेन्द्रय, सर्वजन उपकारक, विद्वान् र विचारशील मानिस हरु को ऊ अन्तिके= अत्यन्त निकट छ, तद् अन्तरस्य सर्वस्य= किन कि ऊ सबैका आत्मा भित्र व्यापक अन्तर्यामी भएर सर्वत्र पूर्ण भरि भईरहेको छ । ऊ आत्मा को पनि आत्मा हो किनकि तदु सर्व स्यास्य बाह्यतः= परमेश्वर समस्त जगत् भित्र र बाहिर तथा मध्य अर्थात् एक तिलमात्र पनि ऊ बिना खालि छैन । ऊ अखण्ड एकरस सबैमा व्यापक भई रहे छ, उसैलाई जान्नाले नै सुख तथा मुक्ति हुन्छ, अन्यथा हुँदैन ॥१२॥

## स्तुतिविषयः

आयुर्यज्ञेन कल्पतां प्राणो यज्ञेन कल्पतां चक्षुर्यज्ञेन कल्पताꣳ श्रोत्रं यज्ञेन कल्पतां वाग्यज्ञेन कल्पतां मनो यज्ञेन कल्पतामात्मा यज्ञेन कल्पतां ब्रह्मा यज्ञेन कल्पतां ज्योतिर्यज्ञेन कल्पताꣳ स्वर्यज्ञेन कल्पतां पृष्ठं यज्ञेन कल्पतां यज्ञो यज्ञेन कल्पताम्। स्तोमश्च यजुश्च ऋक्च साम च बृहच्च रथन्तरं च । स्वर्देवा अगन्मामृता अभूम प्रजापतेः प्रजा अभूम वेट् स्वाहा ॥१३॥

- यजुः १८ । २१ ॥.

व्याख्यान– [यज्ञो वौ विष्णुः[1], यज्ञो श्वै ब्रह्म[2] इत्याद्यैतरेय-शतपथ ब्राह्मणश्रुतेः] यज्ञ-यजनीय जुन सबै मानिस हरु को पूज्य ईष्टदेव परमेश्वर हो, तेसको लागी अति श्रद्धाले यथावत् सर्वस्व समर्पण गरून्। यही यस मंत्र मा उपदेश र प्रार्थना छ। आर्युयज्ञेन कल्पनां ......... रथन्तरञ्च= हे सर्वशक्तिमन् ईश्वर !तपाईंको जुन यो आज्ञा छ कि सबैजना ले मेरा लागी सबै पदार्थ अर्पण गरुन् एस कारण हामीहरु आयु वा उमेर, प्राण,चक्षु, अर्थात्-आँखा, कान, वाणी, मन, आत्मा अर्थात् जीव, ब्रह्म=वेदविद्या, ज्योति [सूर्यादि लोक तथा अग्न्यादि पदार्थ] तथा स्वर्ग=सुख साधन, पृष्ठ =पृथिव्यादि सबै लोक आधार तथा पुरुषार्थ, यज्ञ =हामीहरु जुन-जुन राम्रो काम गर्द छौं स्तोम = स्तुति, यजुर्वेद, ऋग्वेद, सामदेव च कारबाट अथर्ववेद, बृहद्रथन्तर, महारथन्तर साम इत्यादि सबै पदार्थ तपाईं लाई समर्पण गर्दछौं । हामीहरु त केवल तपाई कै शरण मा छौं । हाम्रा लागि तपाईंको जस्तो इच्छा हुन्छ त्यस्तै गर्नु होस्। परन्तु हामी तपाईं कै सन्तान हौं। तपाईं का कृपा ले स्वरगन्म= उत्तम सुखमा प्राप्त हौं। बाचुन्जेल सदा चक्रवर्ती राज्यादि भोग बाट सुखी रहौं र मरणान्तर पनि हाँमी सुखी नै रहौं। हे महादेवामृत ! हामी देव [परम विद्वान्] होऔं र अमृत=मोक्ष जुन

१. शतः १।१।२।१३॥
२. ब्रह्म वै यज्ञः। ऐ.ब्रा० ८।२२॥

तपाईं को प्राप्ति हो । तेस लाई प्राप्त गरेर सदैव जन्ममरण रहित अमृतस्वरूप मा रहौं । वेट् स्वाहा = हजुर का आज्ञा को पालन र जसबाट तपाईंको प्राप्ति हुन्छ, तेसक्रिया मा सदा तत्पर रहौं । तथा अर्न्तयामी तपाईंले हृदय मा जो आज्ञा गर्नु हुन्छ तेसतै हाम्रो हृदय मा ज्ञान होस्, तेस्तै भाषण गरौं, एसका विपरीत कहिल्यै नगरौं । हे कृपा निधे ! हाम्रो योगक्षेम् [सम्पूर्ण निर्वाह] सदा तपाईं नै गर्नु होला । हजुर को सहयोग ले हामीलाई सर्वत्र विजय र सुख मिलोस् ॥ १३ ॥

## स्तुतिविषयः

यस्मान्न जातः परोऽअन्योऽअस्ति
य आविवेश भुवनानि विश्वा ।
प्रजापतिः प्रजया सꣳ रराणस्त्रीणि
ज्योतीꣳषि सचते स षोडशी ॥१४॥

- यजुः ८।३६ ॥

व्याख्यान् –यस्मात् न, जातः ,परः,अन्यः अस्ति = जसभन्दा ठूलो, तुल्य वा उत्तम न भयो , न छ अरू न कुनै कहिल्यै हुने छ तेसलाई परमात्मा भन्नु पर्दछ । जुन विश्वा भुवनानि= समस्त भुवन [लोक] सम्पूर्ण पदार्थ हरु को निवास्थान असंख्यात लोक हरु मा आविवेश= प्रविष्ट भएर पूर्ण भईरहेछ , तेही ईश्वर प्रजापतिः= प्रजा को पति अर्थात् स्वामी हो । उही सबै प्रजया संरराणः= प्रजालाई आनन्दित गरि रहेछ, तथा आफू सबै प्रजा मा रमी रहेछ । त्रीणीत्यादि= तीन ज्योती= अग्नी, वायु र सूर्य इनीहरु लाई जसले रचे को हो, सम्पूर्ण जगत् को व्यवहार तथा पदार्थ विद्या हरु को उत्पति का लागी ई तिनै लाई मुख्य सम्झनु पर्छ । सः षोडसी= सोह्र कला हरु लाई जसले उत्पन्न गरेको छ । यसले ईश्वर सोह्र कला ले पूर्ण कहलाउँछ । ती सोह्र कला हुन्- (१) ईक्षण [विचार] (२)प्राण (३) श्रद्धा (४) आकाश (५) वायु

(६)अग्नि (७)जल (८)पृथिवी (९) इन्द्रिय (१०) मन (११) अन्न (१२) वीर्य [पराक्रम] (१३) तप [धर्मानुष्ठान] (१४) मन्त्र [वेदविद्या] (१५) कर्म=[चेष्टा] (१६) लोक र सम्पूर्ण लोक हरु का नाम एति कला हरु का माझ मा सबै जगत् छ, अरू परमेश्वर मा अनन्त कला हरु छन् । तेसको उपासना छोडेर जो मानिस अन्य को उपासना गर्दछ तेसले कहिल्यै पनि सुख प्राप्त गर्न सक्तैन अपितु सदा दुःख मा नै परी रहन्छ ॥१४॥

## स्तुतिविषयः

स नः पितेव सूनवेऽग्ने सूपायनो भव ।
सचस्वा नः स्वस्तये ॥१५॥

- यजुः० ३।२४

व्याख्यान–अग्ने= [ब्रह्म ह्यग्निः[1] इत्यादि शतपथादि प्रामाण्याद् ब्रह्मैवात्राग्निर्ग्राह्यः] हे विज्ञानस्वरूप ईश्वराग्ने ! तपाईं हाम्रा लागी सूपायनः भव= सजिलै संग प्राप्त र श्रेष्ठ उपाय का प्रापक, अनुत्तम[2] स्थान का दाता हुनुहुन्छ तथा हामी हरु का रक्षक पनि तपाईं हुनुहुन्छ। हे स्वस्तिदः परमात्मान् ! सचस्व नः स्वतये= समस्त दुःख हरु लाई नाश गरी हाम्रा लागी सदैव सुख वर्तमान गराउनु होस् । जसले हाम्रो वर्तमान जीवन उत्तम होस् । स नः पितेव सूनवे= जसरी करुणामय पिता ले आफ्ना छोरा छोरी लाई सुखी पारेरै राख्तछ, तेसरी नै हजुरले पनि हामीलाई सदा सुखी तुल्याएर राख्नु होस् किन भने हामी विकामे भयौं भने हजुरको शोभा हुँदैन, किञ्च सन्तान लाई सुधारना ले नै पिता को शोभा र बढाँई हुन्छ अन्यथा हुँदैन ॥१५॥

---

१. शतपथः १।५।१।११
२. उनुत्तम=अतिउत्तम

## स्तुतिविषयः

विभूरसि प्रवाहणो वह्निरसि हव्यवाहनः ।
श्वात्रोऽसि प्रचेतास्तुथोऽसि विश्ववेदाः ॥१६॥

- युजः ५ । ३१ ॥

व्याख्यान– हे व्यापकेश्वर ! तपाईं विभूः असि= विभु हुनुहुन्छ, अर्थात् तपाईं सर्वत्र प्रकाशित वैभवैश्वर्युक्त हुनुहुन्छ अर्को कुनै छैन । विभु भएर तपाईं सम्पूर्ण जगत् का प्रवाहणः = प्रवाहण अर्थात् आफ्नो-आफ्नो कर्म मा नियम पूर्वक चलाउने र सबैका निर्वाह कारक पनि तपाईं नै हुनुहुन्छ । हे स्वप्रकाशक सर्वरसवाहकेश्वर! तपाईं वह्निः असि हव्यवाहनः = वह्नि हुनुहुन्छ । सबै हव्य उत्कृष्ट रस हरु का भेदक आकर्षक तथा यथावत् स्थापक तपाईं नै हुनुहुन्छ । हे आत्मन् ! तपाईं श्वात्रः असि प्रचेताः= शीघ्र व्यापनशील, हुनुहुन्छ । तथा प्रकृष्ट ज्ञानस्वरूप र प्रकृष्ट ज्ञान का दाता हुनुहुन्छ । हे सर्ववित् ! तुथः असि विश्ववेदः= तपाईं तुथ एवं विश्ववेदा हुनुहुन्छ । 'तुथो वै ब्रह्मः[1] [यो शतपथ को श्रुति हो] समस्त जगत् मा विद्यमान, प्राप्त र लाभ गराउने हुनुहुन्छ । ॥१६॥

## प्रार्थनाविषयः

उशिगसि कविरङ्घारिरसि बम्भारिरवस्यूरसि दुवस्वाञ्छुन्ध्यूरसि मार्जालीयः सम्राडसि कृशानुः परिषद्योऽसि पवमानो नभोऽसि प्रतक्वा । मृष्टोऽसि हव्यसूदन ऋतधामासि स्वर्ज्योतिः ॥१७॥

- यजुः०५।३२

व्याख्यान– हे सर्वप्रिय ! तपाईं उशिक् असिः=कमनीयस्वरूप अर्थात् सम्पूर्ण जनता ले जसलाई चाहन्छन् किनकि तपाईं कविः = पूर्ण विद्वान् हुनुहुन्छ तथा तपाईं अङ्घारिः असिः= स्वभक्तजन हरु को जुन् अघः [पाप] छ तेसका अरि [शत्रु] हुनुहुन्छ, अर्थात् सर्व पाप

१ शतपथः ४।३।४।१५

नाशक हुनुहुन्छ तथा वम्भारिः= स्वभक्त हरु र सर्वजगत् का पालन र धारणकर्त्ता हुनुहुन्छ । अव स्यूरसि दुवस्वान्= तपाईं सदा स्वभक्तजन र धर्मात्मा हरु लाई सदा अन्नादि पदार्थ दिने इच्छा गर्नु हुन्छ तथा परिचरणीय विद्वान् हरु द्वारा [परिचारित] सेवनीयतम् हुनुहुन्छ । शुन्ध्यूरसि मार्जालीयः= शुद्धस्वरूप र समस्त जगत् का शोधक तथा पाप हरु लाई मार्जन [निवारण] गर्नुहुने प्रभु नै हुनुहुन्छ, अर्को कुनै छैन । सम्राडसि कृशानुः=सम्पूर्ण राजा हरु का महाराज तथा कृश=दीनजन हरु का प्राण का सुख दाता तपाईं नै हुनुहुन्छ, परिषद्योसि पवमानः= हे न्यायकारिन् ! पवित्र सभास्वरूप, सभा का आज्ञापक [आज्ञा दिने] सभ्य, सभापति, सभारक्षक, सभा बाट नै सुखदिने तपाईं नै हुनुहुन्छ, तथा पवित्रस्वरूप, पवित्रकारक र पवित्रता प्रिय पनि तपाईं नै हुनुहुन्छ नभोऽसि = हे निर्विकार ! आकाशवत् व्यापक क्षोभ रहित, अतिसूक्ष्म हुनका कारण तपाईंको नाम 'नभ' हो तथा प्रतक्वा=सबैका ज्ञाता, सत्यासत्यकारी मानिस हरु का कर्म हरु को साक्ष राखने जसले जसतो पाप वा पुण्य गरेको छ तेसलाई तेस्तै फल नमिल्ने । अर्का को पुण्य वा पाप को फल अर्का लाई कहिल्यै नमिल्ने । मृष्टोऽसि हव्यसूदनः= मृष्ट = शुद्धस्वरूप, सबै पाप हरु का मार्जक, शोधक तथा मिष्ट, सुगन्धित, रोगनाशक, पुष्टिकारक ई द्रव्य हरु द्वारा वायु एवं वृष्टि लाई शुद्धि गर्ने गराउने तपाईं नै हुनुहुन्छ, एस कारण तपााईं को नाम "हव्यसूदन" हो । ऋतधामासि= हे भगवन् ! तपाईंको धाम = स्थान नै सर्वगत सत्य र यथार्थ स्वरूप, हो, यथार्थ (सत्य) व्यवहार मा नै तपाईं निवास गर्नु हुन्छ, मिथ्या मा गर्नुहुन्न । स्वः = तपाईं सुखस्वरूप र सुखकारक हुनुहुन्छ तथा ज्योतिः – स्वप्रकाश[१] र सबैका प्रकाशक पनि तपाईं नै हुनुहुन्छ ॥१७॥

१ स्वप्रकाश= आफ्नै ज्ञानले प्रकाशित ।

# प्रार्थनाविषय

समुद्रोऽसि विश्वव्यचाः अजोऽस्येकपादहिरसि बुध्न्या
वागस्यैन्द्रमसि सदोऽस्यृतस्य द्वारौ मामा
सन्ताप्तमध्वनामध्वपते
प्र मा तिर स्वस्ति मेऽस्मिन् पथि देवयाने भूयात् ॥१८॥

- यजुः ५ । ३३ ॥

व्याख्यान– समुद्रोऽसि विश्वव्यचाः = हे द्रवणीयस्वरूप ! समस्त भूतमात्र तपाईंमा नै द्रवेका छन्, किनभने कार्य कारण मा नै मिलेका छन्, तपाईं सबैका कारण हुनुहुन्छ तथा आफ्नो व्याज=सहज क्रियाद्वारा नै सबै जगत् लाई विस्तृत गर्नुभएको छ, एसकारण तपाईं विश्वव्यचाः हुनुहुन्छ अजोऽस्येकपात् = तपाईंको जन्म कहिल्यै हुँदैन अरू यो सबै जगत् किञ्चिन्मात्र एक देश मा छ । तपाईं अनन्त हुनुहुन्छ । अहिरसि बुध्न्यः = तपाईंलाई हीनता कहिल्यै हुँदैन । तथा तपाईं जगत्का मूलकारण हुनुहुन्छ । अरू अन्तरिक्ष मा पनि तपाईं सर्वदा नै पूर्ण रहनु हुन्छ । वागस्यैन्द्रमसि सदोसि = सकल शास्त्र का उपदेशक, अनन्त विद्यास्वरूप हुनाले तपाईं 'वाक्' हुनुहुन्छ, परमैश्वरर्यस्वरूप समस्त विद्वान् हरु मा अत्यन्त शोभायमान हुना ले तपाईं 'ऐन्द्र' हुनुहुन्छ। सम्पूर्ण संसार तपाईंमा टिकेको छ वा तपाईं मा वास बसेको छ, एस कारण तपाईं 'सदः= सभारूप' हुनुहुन्छ । ऋतस्य द्वारौ मा मा सन्ताप्तम् = 'सत्यविद्या' र 'धर्म' ई दुवै मोक्षस्वरूप तपाईंलाई प्राप्त गर्ने द्वार हुन् । तिनलाई हामीहरुका लागी कहिल्यै पनि सन्तापयुक्त न राख्नु होला किन्तु सुखस्वरूप ले खुल्लै राख्नु होला, जसले हामी हरु तपाईसंग सहजै प्राप्त हुन सकौं । अध्वना मित्यादि = हे अध्वपते ! परमार्थ र व्यवहार का बाटा मा मलाई कहिं क्लेश न दिनु होला, किन्तु ती बाटा हरु मा मलाई स्वस्ति वा आनन्द रहोस् कुनै प्रकार को दुःख न होस् ॥१८॥

## स्तुतिविषयः

देवकृतस्यैनसोऽवयजनमसि ।
मनुष्यकृतस्यैनसो ऽ वयजनमसि ।
पितृकृतस्यैनसोऽवयजनमसि ।
आत्मकृतस्यैनसो ऽवयजनमसि ।
एनस ऽएनसोऽवयजनमसि । यच्चाहमेनो विद्वांश्चकार ।
यच्चाविद्वांस्तस्य सर्वस्यैनसोऽवयजनमसि ॥१९॥

- यजुः ८ । १३ ॥

व्याख्यान–हे सर्वपापप्रणाशक ! देवकृतस्य, एन सः अवयजनम् असि= इन्द्रिय, विद्वान् र दिव्यगुणयुक्त जनका पापहरुका नाशक एक मात्र तपाईं हुनुहुन्छ, अर्को कुनै छैन एवं मनुष्य-[मध्यस्थ जन] पितृ [परमविद्यायुक्त जन] र आत्मकृतस्य =जीव का पाप हरु, तथा एनसः एनसः= पापभन्दा पनि ठूला पाप हरु बाट तपाईं 'अवयजन' हुनुहुन्छ अथार्त् तपाईं सर्वपापरहित हुनुहुन्छ, अरू हामी सबै मानिस हरु लाई पनि पाप देखि टाढा राख्ने एक तपाईं नै दयामय पिता हुनुहुन्छ । हे महानन्तविद्य! यत् च अहम् एनसः विदाँश्चकार, यच्चाविद्वान् = मैले विद्वान् वा अविद्वान् भएर जुन-जुन पाप गरेको छु सर्वस्यैनसः अवयजनमसि = ती सबै पाप हरु लाई छोडाउँने तपाईं बिना अर्को कुनै पनि एस संसार मा मेरो शरण दाता छैन, एसले गर्दा हाम्रा अविद्यादि सबै पाप छोडाएर चाँडै शुद्ध गरिदिनु होस् । ॥१९॥

## स्तुतिविषयः

हिरण्यगर्भः समवर्त्तताग्रे भूतस्य
जातः पतिरेक ऽआसीत् ।
स दाधार पृथिवीं द्यामुतेमां कस्मै
देवाय हविषा विधेम ॥२०॥

- यजुः० १३।४

व्याख्यान–जब सृष्टि भएको थिएन तेति खेर एक अद्वितीय हिरण्यगर्भः= हिरण्यगर्भ [जुन सूर्यादि तेजस्वी पदार्थ हरु को 'गर्भ' नाम उत्पत्तिस्थान र उत्पादक हो ।] सम् अवर्तत अग्रे= त्यो पहिले देखिनै थियो, भूतस्य जातः पतिः एकः आसीत्= सम्पूर्ण जगत् को सनातन, प्रादुर्भूत[२] प्रसिद्ध पति हो। सः दाधार पृथिवीम्, द्याम् उत इमाम् = तेहि परमात्मा पृथिवी देखि प्रकृति पर्यन्त जगत् रचना गरी धारण गर्द छ । कस्मै देवाय हविषा विधेम= [प्रजापतये, कः प्रजापतिः[३] प्रजापतिर्वै कः[४] तस्मै देवाय-शतपथे] प्रजापति जुन परमात्मा हो उसको पूजा आत्मादि पदार्थ हरु को यथावत् समर्पण गर्नु, यो भन्दा भिन्नको उपासना लेश मात्र पनि हामीले गर्न हुँदैन । जसले परमात्मा लाई छोडेर वा उसको स्थान मा अर्का को पूजा गर्दछ। तेसको र तेस देश भरि को अत्यन्तै दुर्दशा हुन्छ यो प्रशिद्ध छ । एसर्थ तिमीलाई चेतनाभया ! तिमीलाई सुख को इच्छा छ भने एक निराकार परमात्मा को यथावत् भक्ति गर अन्यथा तिमीलाई कहिल्यै सुख हुने छैन । ॥२०॥

---

२ ज्ञान र चेष्टा युक्त ।

३ को हि प्रजापति ः। शतपथ ६।२।२।५

४ शत० ६।४।३।४।७।३।१।२०

## प्रार्थनाविषयः

इन्द्रो विश्वस्य राजति ।
शं नोऽअस्तु द्विपदे शं चतुष्पदे ॥२१॥

- यजुः ३६ । ८ ॥

व्याख्यान–इन्द्रः विश्वस्य राजति = हे इन्द्र ! परमैश्वर्ययुक्त !! तपाईं समस्त संसार का राजा हुनुहुन्छ, सर्वप्रकाशक हुनुहुन्छ । हे रक्षक ! तपाईंको कृपा ले नः = हाम्रा द्विपदे = जो पुत्रादि छन्, तिनका लागी शम् अस्तु= परमसुखदायक हुनु होस् तथा नः चतुस्पदे= हाम्रा हाति,घोडा र गौ आदि पशु हरु का लागी पनि शम् = परमसुखकारक हुनु होस्, जसले गर्दा हामीहरु लाई सदा आनन्द भई रहोस् ॥२१॥

## स्तुतिविषयः

शं नो वातः पवताᳬशं नस्तपतु सूर्यः ।
शं नः कनिक्रदद् देवः पर्जन्योऽअभि वर्षतु ॥२२॥

- यजुः ३६ । १० ॥

व्याख्यान– हे सर्वनियन्तः ! शं नः वातःपवताम्=हाम्रा लागी सदैव सुखकारक, सुगन्धित, शीतल र मन्द-मन्द वायु चलोस् । सूर्यः नः शम् तपतु= एवं, सूर्य पनि सुखकारक भएर तपोस् । कनिक्रदत् देवःपर्जन्यः नः शम् अभिवर्षतु = तथा मेघ पनि सुख दायी शब्द गर्दै अर्थात् गर्जनपूर्वक सदैव समय - समय मा सर्वत्र सुखकारक वर्षा बर्षियोस् जसलेगर्दा तपाईंका कृपापात्र हामीहरु सदा सुख र आनन्द मा नै रहौं ॥२२॥

## प्रार्थनाविषयः

अहानि शं भवन्तु नः शꣳरात्रीः प्रति धीयताम्।
शं न इन्द्राग्नी भवतामवोभिः शं न इन्द्रावरुणा रातहव्या।
शं न इन्द्रापूषणा वाजसातौ शमिन्द्रासोमा
सुविताय शंयोः ॥२३॥

- यजुः ३६। ११ ॥

व्याख्यान– हे क्षणादिकालपते ! अहानि, शं भवन्तु नः = तपाईंका नियम बाट [नियन्त्रित] सबै दिवस हरु हामीलाई सुखरूप नै हुन्। शम्,रात्रीः, प्रतिधीयताम् = हे भगवन्! हाम्रा लागी सबै रात्री हरु पनि आनन्द संग व्यतीत् हुन्। तपाईंले दिन एवं रात्री हरु लाई सुखकारक गरी धारण गराउनु होस्, जसबाट हामी सर्बदा सुखी रहौं। हे सर्वस्वामिन्! इन्द्राग्नी= सूर्य तथा अग्नि ई दुवै नः = हामीलाई तपाईंका अनुग्रह ले र नानाविध रक्षा साधन हरु ले शम् भवताम्= सुख कारक हुन्। इन्द्रावरुणा रातहव्या = हे प्राणाधार! हजुरको प्रेरणा बाट 'होम' ले शुद्धगुण युक्त भएको वायु र चन्द्रमा नः = हामीहरुका लागी शम्= सदा सुखस्वरूप नै भई रहून्। इन्द्रापूषणा, वाजसातौ= हे प्राणपते! तपाईंको रक्षा ले पूर्ण आयु र बल ले युक्त प्राणवान् तथा अत्यन्त पुरुषार्थ युक्त [भएर] हामीहरु आफ्ना युद्ध मा स्थिर रहौं, शत्रु हरु का अगाडी हामी कहिल्यै निर्बल न हौं। इन्द्रासोमा सुविताय शंयोः= [प्राणापानौ वा इन्द्राग्नी[५] इत्यादि शत पथे] हे महाराज तपाईंको प्रबन्ध बाट राजा र प्रजा परस्पर विद्यादि गुणयुक्त भएर आफ्ना ऐश्वर्य को उत्पादन गरून् तथा तपाईंको कृपा ले परस्पर प्रीति युक्त हुन् र अत्यन्त सुख तथा लाभ मा प्राप्त हुन्। हामी सन्तान लाई सुखी देखेर हजुर अत्यन्त प्रशन्न हुनु होस् र हामी पनि प्रसन्नता ले तपाईं र तपाईंको जुन सत्य आज्ञा छ तेसमा नै दृढ हौं ॥२३॥

---

५ गोपथ उ० २। १॥

## स्तुतिविषयः

प्र तद्वोचेदमृतं नु विद्वान्
गन्धर्वो धाम बिभृतं गुहा सत्।
त्रीणि पदानि निहिता गुहास्य
यस्तानि वेद स पितुः पिताऽसत्॥२४॥

- यजुः ३२। ९॥

व्याख्यान = हे वेदादिशास्त्र र विद्वान् हरु ले प्रतिपादन गर्न योग्य भगवन् ! जुन अमृतम् = अमृत [मरणादि दोषरहित] मुक्त हरु को धाम= निवासस्थान, सर्वगत, सबैलाई धारण र पोषण गर्ने सबैका बुद्धि हरु को साक्षी ब्रह्म हो यो तपाईंको उपदेश तथा धारण लाई जुन विद्वान् जान्दछ त्यो गन्धर्वः=गन्धर्व कहलाउँछ [गच्छतीति गं=ब्रह्म, तद्धरतीति स गन्धर्वः] सर्वगत ब्रह्म लाई जसले धारण गर्द छ तेसको नाम 'गन्धर्व' हो तथा त्रीणि पदानि निहिता गुहा अस्य यः तानि वेद=परमात्मा का तीन पद छन् जगत् को उत्पति, स्थिति र प्रलय गर्ने सामर्थ्य ई तीन लाई तथा ईश्वर लाई जो स्वहृदय मा जान्द छ, सः, पितुः, पिता असत् = त्यो पिता को पनि पिता हो अर्थात् विद्वान् हरु को पनि विद्वान् हो। ॥२४॥

## प्रार्थनाविषयः

द्यौः शान्तिरन्तरिक्ष ँशान्तिः पृथिवी शान्तिरापः शान्तिरोषधयः
शान्तिः। वनस्पतयः शान्तिर्विश्वे देवाः शान्तिर्ब्रह्म शान्तिः
सर्वँशान्तिः शान्तिरेव शान्तिः सा मा शान्तिरेधि॥२५॥

- यजुः ३६। २७॥

व्याख्यान– हे समस्त दुःख हरु लाई शान्ति प्रदागर्नु हुने प्रभो! द्यौः शान्तिः = सबै लोक हरु भन्दा माथि जुन आकाश छ त्यो हाम्रा लागी सर्वदा शान्त [निरुपद्रव] सुख कारक नै रहोस्। अन्तरिक्षम् शान्तिः अन्तरिक्ष=मध्यस्थलोक र तेसमा रहने वायु आदि पदार्थ, पृथिवी शान्तिः = पृथिवी र पृथिवीस्थ पदार्थ,

आपः शान्तिः = जल र जलस्थ पदार्थ, ओषधयः शान्तिः= औषधी र तेसमा रहने गुण हरु, वनस्पतयः शान्तिः= वनस्पति र वनस्पतिस्थ गुण हरु, विश्वेदेवाः शान्तिः= जगत् का सबै विद्वान् तथा विश्वद्योतक वेदमन्त्र हरु, इन्द्रिय, सूर्यादि र तिनका किरण र तत्रस्थ गुण हरु ब्रह्म शान्तिः= ब्रह्म =परमात्मा तथा वेदशास्त्र, स्थूल तथा सूक्ष्म चराचर जगत् ई सबै पदार्थ हाम्रा लागी शान्ति प्रदायक हुन्, हे सर्व शक्ति मन् परमात्मन् ! तपाईंका कृपा ले शान्तिः एव शान्तिः = शान्ति अर्थात् निरुपद्रव सदा अनुकूल र सुखदायक हुन्। सा मा शान्तिः एधि = साथै मँलाई पनि त्यो शान्ति प्राप्त होस् जसले मँ पनि हजुर को कृपा ले शान्त, दुष्टक्रोधादि उपद्रव रहित हूँ तथा समस्त संसारस्थ जीव हरु पनि दुष्टक्रोधादि उपद्रव रहित हुन् ॥२५॥

## स्तुतिविषयः

नमः शम्भवाय च मयोभवाय च नमः शङ्कराय च
मयस्कराय च नमः शिवाय च शिवतराय च ॥२६॥

- यजुः १६ । ४१ ॥

व्याख्यान – हे कल्याणस्वरूप, कल्याणकर ! शम्भवाय = तपाईं ‘शंभव’ हुनुहुन्छ । [मोक्ष-सुखस्वरूप र मोक्ष-सुखकारक हुनुहुन्छ] तपाईंलाई नमः = नमस्कार छ, तपाईं मयोभवाय= ‘मयोभव’ हुनुहुन्छ। सांसारिक सुख हरु को विधान गर्ने तपाईंलाई मँ नमस्कार गर्दछु। तपाईं शङ्कराय = ‘शङ्कर’ हुनुहुन्छ, तपाईं बाट नै जीव हरु को कल्याण हुन्छ। अन्य बाट हुँदैन। तथा मयस्कराय= ‘मयस्कर’ अर्थात् मन, इन्द्रिय, प्राण र आत्मा लाई सुख प्रदान गर्ने तपाईं हुनुहुन्छ, तपाईं शिव = ‘मंगलमय’ हुनुहुन्छ तथा-शिवतर= ‘अत्यन्त कल्याण स्वरूप’ र कल्याणकारक हुनुहुन्छ, एस कारण ले हामी तपाईं लाई बारम्बार नमः = नमस्कार गर्दछौं । [नमो नम इति यज्ञ[६]ः -शतपथे] श्रद्धा-भक्ति ले जुन मानिस ईश्वर लाई नमस्कारादि गर्दछ, त्यो पनि मङ्गलमय नै हुन्छ ॥२६॥

६ शतपथ० २.४.२.२४॥

## प्रार्थनाविषयः

भद्रं कर्णेभिः श्रृणुयाम देवा भद्रं पश्येमाक्षभिर्यजत्राः ।
स्थिरैरङ्गैस्तुष्टुवा ७७ सस्तनूभिर्व्यशेमहि देवहितं यदायुः ॥२७॥

- यजुः २५ । २१ ॥

व्याख्यान– हे देवेश्वर ! देवाः= विद्वान्‌जन हरु हो ! हामी कर्णेभिः भद्रं श्रृणयाम = कान हरु ले सदैव भद्र =कल्याणकारी कुरा मात्र सुनौं अकल्याणकारी कुरा हरु कहिल्यै न सुनौं। यजत्राः = हे यजनीयेश्वर ! हे यज्ञकर्तारः ! अक्षभिः भद्रं पश्येम= हामी आँखा ले सदा कल्याणकारी अथार्त् मङ्गलमय र सुखदायक दृश्य देखौं । हे जगदीश्वर ! हे सज्जन गण ! स्थिरैः, अङ्गैः, तनूभिः= हाम्रा सबै अङ्ग-उपाङ्ग [श्रोत्रादि इन्द्रिय तथा सेनादि उपाङ्ग] सदा स्थिर अर्थात् दृढ रहुन् जस बाट हामीहरुलाई स्थिरता पूर्वक तुष्टुवांसः= सधैं तपाईं को स्तुति र तपाईंका आज्ञा को अनुष्ठान गरौं र हामीहरु देवहितं, यद्, आयुः= आत्मा, शरीर, इन्द्रिय र विद्वान् हरु लाई हित गर्ने आयु-विविध प्रकार का सुख हरु का साथ प्राप्त होस्, अर्थात् हामी सदा सुखै सुख मा रहौं ॥२७॥

## स्तुतिविषयः

ब्रह्म जज्ञानं प्रथमं पुरस्ताद्वि
सीमतः सुरुचो वेनऽआवः।
स बुध्न्याऽउपमाऽअस्य विष्ठा :
सतश्च योनिमसतश्च विवः॥ २८॥

- यजुः १३ । ३ ॥

व्याख्यान – हे महनीय परमेश्वर ! तपाईं ब्रह्म= महान् हरु भन्दा पनि महान् हुनुहुन्छ, तपाईं भन्दा महान् अथवा तपाईंका तुल्यकोहि पनि छैन । जज्ञानम्=सम्पूर्ण जगत् मा व्यापक [प्रादुर्भूत] हुनुहुन्छ । सम्पूर्ण जगत् का प्रथमम्=प्रथम [आदि कारण] तपाईं नै हुनुहुन्छ। सूर्यादि लोक

सीमतः=सिमाना सम्म [मर्यादा सहित] सुरुचः= तपाईंबाटै प्रकाशित छन् । पुरस्तात्=ई सबै लोक हरु लाई अगाडि नै रचना गरेरे आफु स्वयं ले धारण गरि रहनुभएको छ । वि आवः= ई सबै लोक हरु लाई थरि थरि का नियम हरु ले छुट्टा-छुट्टै यथायोग्य चलाई रहनु भएको छ। वेनः= तपाईं आनन्दस्वरूप हुनाले एस्तो कुनै जन संसार मा छैन जसले तपाईंको कामना न गरोस् सबै नै तपाईंलाई भेट्न चाहन्छन् तथा तपाईं अनन्त विद्यायुक्त हुनुहुन्छ। सबै प्रकार ले [आसमन्तात्] रक्षक तपाईं नै हुनुहुन्छ। उही तपाईं बुध्न्याः=अन्तरिक्षान्तर्गत पूर्वादि दिशा पदार्थ हरु लाई विवः=विवृत अर्थात् विभक्त गर्नु हुन्छ। ती अन्तरिक्षादि उपमा= सबै व्यवहार हरु मा उपयुक्त हुन्छन् । अरू ती विष्टाः= एस विविध जगत् का निवासस्थान हुन् । सत् =विद्यमान स्थूल जगत् असतः=अविद्यमान् अर्थात् अव्यक्त, चक्षुरादि इन्द्रिय बाट अगोचर एस विविध जगत् का योनिम्=आदिकारण तपाईं लाई नै वेदशास्त्र र विद्वान् हरु भन्दछन्, एसर्थ एस जगत् का माता-पिता तपाईं नै हुनुहुन्छ, हामी सबै का भजनीय इष्टदेव पनि तपाईं नै हुनुहुन्छ ॥२८॥

## प्रार्थनाविषयः

सुमित्रिया न ऽआप ऽओषधयः सन्तु दुर्मित्रियास्तस्मै सन्तु
योऽस्मान् द्वेष्टि यं च वयं द्विष्मः ॥२९॥

- यजुः ३६ । २३ ॥

व्याख्यान– हे सर्वमित्रसम्पादक ! तपाईंको कृपा ले आपः=प्राण जल तथा विद्या अरू ओषधयः=औषधि हरु नः सुमित्रियाः= हाम्रा लागि सदा सुख दायक सन्तु=होउन् कहिल्यै प्रतिकूल न होउन् अरू यो अस्मान् द्वेष्टि = जो कोही हामी संग द्वेष, अप्रीति र शत्रुता गर्दछ तथा वयं च यं द्विष्मः= जुन दुष्ट संग हामी द्वेष गर्द छौं, हे न्याय कारिन् ! तस्मै= तेसको लागी दुर्मित्रियाः =पूर्वोक्त प्राणादि प्रतिकूल र दुःखकारक नै सन्तु=हुन् अर्थात् जो अधर्म गर्दछ तेसलाई तपाईं द्वारा रचित जगत् का पदार्थ हरु दुःखदायि नै हुन् जसले गर्दा त्यो [अधर्म न गरोस् र] हामीलाई दुःख दिन न सकोस् र हामीहरु सधैं सुखि रहौं ॥२९॥

## प्रार्थनाविषयः

य ऽ इमा विश्वा भुवनानि जुह्वद्
ऋषिर्होता न्यसीदत् पिता नः ।
स ऽ आशिषा द्रविणमिच्छमानः
प्रथमच्छदवराँ २ ॥ ऽ आ विवेश ॥३०॥

- यजुः १७ । १७ ॥

व्याख्यान–होता=उत्पति - काल मा दिने र प्रलय-काल मा सबैलाई लिने परमात्मा नै हो। ऋषिः=सर्वज्ञ इमा विश्वा भुवनानि जुह्वत् =ई सबै लोक-लोकान्तर =भुवन हरु लाई आफ्नो निजसामर्थ्य=कारण मा होम [प्रलय] गरेर न्यसीदत् =नित्य अवस्थित रहन्छ उही नः पिता=हाम्रो पिता हो, फेरि जब द्रविणम् =द्रव्यरूप जगत् लाई स्वेच्छा ले उत्पन्न गर्न चाहन्छ, तेस आशिषा=सामर्थ्य द्वारा यथायोग्य विविध जगत् लाई सहज स्वभाव ले रचना गरिदिन्छ। एस चराचर प्रथमच्छत् = विस्तीर्ण जगत् लाई रचेर अनन्तस्वरूप ले अवरान् = आच्छादित गरेको छ र आविवेश = अन्तर्यामी साक्षी स्वरूप तेसमा प्रविष्ट भई रहेछ । अर्थात् बाहिर भित्र परिपूर्ण भइरहेको छ । उही हाम्रो निश्चित पिता हो। उसको सेवा छोडेर जो मनुष्य अन्य पाषाणादि मूर्ति को सेवा गर्दछ त्यो कृतघ्नत्वादि महादोषयुक्त भएर सदैव दुःख भागी हुन्छ, अरू जुन मनुष्य परमदयामय पिता को आज्ञा मा रहन्छ, त्यो सदैव सर्वानन्द को भोग गर्दछ ॥३०॥

## स्तुतिविषयः

इषे पिन्वस्वोर्जे पिन्वस्व ब्रह्मणे पिन्वस्व क्षत्राय पिन्वस्व
द्यावापृथिवीभ्यां पिन्वस्व। धर्मासि सुधर्मामेन्यस्मे नृम्णानि
धारय ब्रह्म धारय क्षत्रं धारय विशं धारय ॥३१॥

- यजुः ३८ । १४ ॥

व्याख्यान – हे सर्वसौख्यप्रदेश्वर ! हामीलाई इषे= उत्तम अन्नका लागी पिन्वस्व= पुष्ट गर, अन्न को अपचन सम्बन्धि रोग हरु बाट बचाऊ तथा हामीहरु अन्न को अभाव ले कहिल्यै दुःखी नहौं । हे महाबल ! ऊर्जे=अत्यन्त पराक्रम का लागी हामीलाई पिन्वस्व= पुष्ट गर । हे वेदोत्पादक ! ब्रह्मणे= सत्य वेद विद्या लाई प्राप्त गर्नका लागी बुद्धि आदि बल द्वारा हामीलाई सदैव पिन्वस्व= पुष्ट र बलयुक्त गर । हे महाराजाधिराज परब्रह्मन् ! क्षत्राय =अखण्ड चक्रवर्ती राज्य का लागी, शौर्य, धैर्य, नीति, विनय, पराक्रम र उत्तम गुण युक्त बल आदि बाट स्वकृपा ले हामीहरुलाई यथावत् पिन्वस्व=पुष्ट गर । अन्य देशवासी राजा हाम्रो देश मा कहिल्यै न हुन् । तथा हामीहरु कहिल्यै पराधीन न हौं । हे स्वर्गपृथिवीश ! द्यावापृथिवीभ्याम्= स्वर्ग [परमोत्कृष्ट मोक्ष सुख] पृथिवी [संसार सुख] ई दुवै का लागी हामीलाई पिन्वस्व= समर्थ गर । हे सुष्ठु धर्मशील ! तिमी धर्म असि=धर्मकारी हौ तथा सुधर्म= धर्मस्वरूप हौ । हामीहरुलाई पनि आफ्नो कृपा ले धर्मात्मा बनाऊ । अमेनि=तिमी निर्वैर हौं, हामीलाई पनि निर्वैर बनाऊ र स्वकृपा दृष्टि ले अस्मे= [अस्मभ्यम्] हाम्रा लागी नृम्णानि= विद्या, पुरुषार्थ, हात्ती, घोडा, सुवर्ण, हीरादिरत्न, उत्कृष्ट राज्य, उत्तम पुरुष र प्रीत्यादि पदार्थ हरु लाई धारय=धारण गराऊ, जसले हामीहरु कुनै पदार्थ को अभाव मा दुःखी नहौं । हे सर्वाधि पते ! ब्रह्म–धारय = ब्राह्मण=पूर्णविद्यादि सद्गुण युक्त हुन्, क्षत्रं धारय= क्षत्रिय-बुद्धि, विद्यादि तथा शौर्यादि गुणयुक्त हुन्, विशं धारय=वैश्य-अनेक विद्या मा-उद्यम, बुद्धि, धन, एवं धान्यादि वस्तुयुक्त हुन् । तथा ‘शूद्रादि’ पनि सेवादि गुण हरु ले युक्त हाम्रो राज्य मा हुन् । ई सबै उत्तम स्वदेश भक्त हुन्, इनिहरु सबैलाई धारय=तपाईं नै धारण गर्नु होस्, जसले हाम्रो अखण्ड ऐश्वर्य तपाईंको कृपा ले सदा वर्तमान रहोस् ॥३१॥

## स्तुतिविषयः

किꣳस्विदासीदधिष्ठानमा
रम्भणं कतमत्स्वित्कथासीत्।
यतो भूमिं जनयन्विश्वकर्मा
वि द्यामौर्णोन्महिना विश्वचक्षाः ॥३२॥

- यजुः १७।१८॥

व्याख्यान– [प्रनोत्तरविद्या बाट] प्रश्न-यस संसार को अधिष्ठानं किंस्वित् = अधिष्ठान के हो ? आरम्भणम्= कारण र उत्पादक को हो? कतमत्स्वित्कथा आसीत् =कुन प्रकार को छ तथा रचना गर्ने ईश्वर को अधिष्ठानादि के हो ? तथा निमित्तकारण र साधन -जगत् वा ईश्वर का के हुन् ? ऊत्तर -यतः=जसबाट विश्व अर्थात्-जगत् कर्म गरीएको छ, तेस विश्वकर्मा=परमात्मा ले अनन्त स्वसामर्थ्य द्वारा भूमिं जनयन्= एस जगत् लाई रचे को हो, उही यो सम्पूर्ण जगत् को अधिष्ठान, निमित्त र साधनादि हो, उसले महिना=आफ्नो अनन्त स्वसामर्थ्य ले यो सबै जीवादि जगत् को यथायोग्य रचना गर्‍यो र भूमि देखि लिएर द्याम्=स्वर्गपर्यन्त रचना गरी स्वमहिमा ले तेसलाई और्णोत्=आच्छादित गरेर राखेको छ, र परमात्मा को अधिष्ठानादि परमात्मा नै हो, अर्को कोही छैन। सबैको उत्पादन रक्षण र धारणादि पनि उही गर्द छ तथा आनन्दमय छ, अरू त्यो कस्तो छ ? एसको उत्तर यो हो कि विश्वचक्षाः=ऊ सकल संसारको द्रष्टा हो, तेसलाई छोडेर जो अरूको आश्रय गर्दछ, भने त्यो दुःख सागर मा किन डुब्दैनथ्यो ?॥३२॥

## प्रार्थनाविषयः

तनूपाऽअग्नेऽसि तन्वं मे पाह्यायुर्दाऽअग्नेऽस्यायुर्मे देहि। वर्चोदाऽअग्नेऽसि वर्चो मे देहि। अग्ने यन्मे तन्वाऽऊनं तन्मऽआपृण ॥३३॥

- यजुः३।१७॥

व्याख्यान–हे अग्ने= सर्वरक्षकेश्वराग्ने ! तपाईं तनूपा असि=हाम्रा शरीर का रक्षक हुनुहुन्छ, अतः मे तन्वं पाहि =कृपागरि मेरो शरीर को रक्षा गर्नुहोस्, हे महावैद्य ! तपाईं आयुर्दा असि =आयु बढाउने र संरक्षक हुनुहुन्छ । मे= मँलाई सुखरूप र आयुःधेहि =उत्तम आयु दिनु होस् । हे अनन्त विद्यातेज युक्त ! तपाईं वर्चः=विद्यादि तेज अर्थात् यथार्थ विज्ञान दाता हुनुहुन्छ । वर्चःमे देहि= मँलाई सर्वोत्कृष्ट विद्यादि तेज दिनुहोस् । पूर्वोक्त शरीरादि को रक्षा बाट मँलाई सदा आनन्द मा राख्नुहोस् । अरू अग्ने यत् मे तन्वा= सर्वोन्नति साधक प्रभो ! जुन-कुनै पनि मेरा शारीरिक अंग-प्रत्यंग मा ऊनम्= न्यूनता छ भने तत्= ती सबै मे= मेरा न्यूनता हरु लाई कृपादृष्टि ले सुख एवं ऐश्वर्य का साथ सबै प्रकारले आपृण= पूर्ण गरि दिनुहोस् । कुनै आनन्द दायक उत्तम पदार्थ को कमी मँलाई नहोस् । तपाईंका सन्तान हामी जब पूर्ण आनन्द मा रहन्छौं, तब तपाईं पिता को शोभा हुन्छ । किन भने बालक हरु ले साना ठूला चिज अथवा सुख माता-पिता लाई छोडेर अरू को संग माग्ने र ? अतः तपाईं हाम्रा सर्व शक्तिमान् पिता सबै ऐश्वर्य तथा सुख प्रदान कर्ता हरु मा पूर्ण हुनुहुन्छ ॥३३॥

## स्तुतिविषयः

विश्वतश्चक्षुरु त विश्वतोमुखो विश्वतोबाहुरुत विश्वतस्पात् ।
सं बाहुभ्यां धमति सं पतत्रैर्द्यावाभूमी जनयन् देव एकः ॥३४॥

- यजः १७ । १९ ॥

व्याख्यान–विश्वतः चक्षुः=विश्व अर्थात् सकल जगत् मा जसका चक्षु अर्थात् आँखा छन्, जसबाट अदृष्ट कुनै वस्तु छैन तथा जसका विश्वतोमुखः विश्वतः बाहुः उत विश्वतः पात्=सर्वत्र मुख, सर्वत्र बाहु, सर्वत्र पाद तथा अन्य श्रोत्रादि पनि छन् । अर्थात् उही सर्वदृक् सर्ववक्ता, सर्वाधारक र सर्वगत, व्यापक ईश्वर छ । उसै संग जो व्यक्ति डराउँछ उही धर्मात्मा हो । तेही विश्वकर्मा परमात्मा

एकमात्र र अद्वितीय छ । द्यावाभूमी संजनयन् = पृथिवी देखि लिएर स्वर्गपर्यन्त जगत् को कर्त्ता हो । ज-जसले ज-जस्तो पाप वा पुण्य गरेको छ, तेस-तेस लाई न्यायकारी दयालु जगत्पिता ले पक्षपात नगरी बाहुभ्याम्= अनन्त बल र पराक्रम-ई दुवै बाहु हरु ले सम्यक्तया पतत्रैः= प्राप्त हुने सुख -दुःख रूप फलदान द्वारा समस्त जीव हरु लाई धमति= [धमन=कम्पन] यथायोग्य जन्म मरणादि फल प्राप्त गराई रहेको छ। तेसै निराकार, अजन्मा, अनन्त, सर्वशक्तिमान्, न्यायकारी र दयामय प्रभु भन्दा अन्य कसैलाई कहिल्यै पनि मान्नु हुदैन । उही याचनीय, पूजनीय, हाम्रो प्रभु, स्वामी र इष्टदेव हो । उसैबाट हामीलाई सुख हुने छ, अर्कोबाट कहिल्यै पनि हुनेछैन ॥३४॥

## स्तुतिविषयः

भूर्भुवः स्वः । सुप्रजाः प्रजाभिः
स्याꣳसुवीरो वीरैःसुपोषःपोषैः ।
नर्य प्रजां मे पाहि शꣳस्य पशून्
मे पाह्यथर्य पितुं मे पाहि ॥ ३५॥

- यजुः ३ । ३७ ॥

व्याख्यान–हे सर्वमङ्गलकारकेश्वर ! तपाईं भूः=सदा वर्तमान हुनुहुन्छ भुवः=वायु आदि पदार्थ हरु को रचना गर्ने र स्वः=सुखरूप लोक हरु का रचनाकार हुनुहुन्छ। हामीलाई तिनैओटा लोक को सुख प्रदान गर्नुहोस्। हे सर्वाध्यक्ष ! हजुरले कृपा गर्नुहोस्। जसले मँ सुप्रजाः प्रजाभिः स्याम्= पुत्र-पौत्रादि उत्तम गुणसम्पन्न प्रजा ले श्रेष्ठ प्रजावान होऊँ। सर्वोत्कृष्ट वीरैः= वीरयोद्धा हरु ले युक्त भएर सुवीरः= युद्ध मा सदा विजयी हूँ। हे महापुष्टिप्रद ! तपाईंको अत्यन्त अनुग्रह ले पोषैः= विद्यादि तथा सोम औषधी, सुवर्णादि अरू नैरोग्यता आदि ले युक्त भएर सुपोषः= सर्वपुष्टियुक्त स्याम्= हूँ। हे नर्य=नर-नारी हरु का हितकारक ! प्रजां मे पाहि= तपाईंले मेरा सन्तान हरू को रक्षा गर्नुहोस् । हे शंस्य= स्तुति गर्न योग्य ईश्वर ! पशून् मे पाहि= मेरा

हात्ती-घोडा आदि पशु हरु को रक्षा गर्नुहोस् । हे अथर्य= व्यापक ईश्वर ! पितुम् मे पाहि=मेरा अन्नको रक्षा गर्नु होस् । हे दयानिधे ! हामीलाई सम्पूर्ण उत्तम पदार्थ हरु द्वारा परिपूर्ण र सबै दिन आनन्द मा राख्नु होस् ॥३५॥

## स्तुतिविषयः

कि ꣳस्विद्वनं क उ स वृक्ष आस
यतो द्यावापृथिवी निष्टतक्षुः ।
मनीषिणो मनसा पृच्छतेदु
तद्यदध्यतिष्ठद् भुवनानि धारयन् ॥३६॥

- यजुः १७ । २० ॥

व्याख्यान–प्रश्न—किं स्विद्वनं क उ स वृक्ष आस= वन तथा वृक्ष केलाई भन्दछन् ? उत्तर—यतः=जुन सामर्थ्य ले विश्वकर्मा ईश्वर ले जसरी सिकर्मी ले अनेक थरिका रचना बाट अनेक प्रकारका सरसामान बनाउँछ, तेसरी नै द्यावापृथिवी='स्वर्ग' [सुखविशेष] र भूमि मध्य [सुखमयलोक] तथा नरक [दुःखविशेष] अरू ई सबै लोक हरु लाई निष्ठतक्षुः= रचेको छ, तेसै सामर्थ्य लाई 'वन' र कार्य लाई 'वृक्ष' भनिन्छ। हे मनीषिणः= विद्वज्जन ! जुन अध्यतिष्ठत् भुवनानि धारयन्=सम्पूर्ण भुवन हरु लाई धारण गरेर सबै जगत् र सबै माथि विराजमान भइ रहेको छ। पृच्छत इत उ= तेसका विषयमा प्रश्न गर तथा उत्तर द्वारा तिमीहरु तेसको निश्चय गर । मनसा=उसैको विज्ञान बाट समस्त जीव को कल्याण हुन्छ अन्यथा हुँदैन ॥३६॥

## प्रार्थनाविषयः

तच्चक्षुर्देवहितं पुरस्ताच्छुक्रमुच्चरत् ।
पश्येम शरदः शतं जीवेम शरदः शतꣳ श्रृणुयाम
शरदः शतं प्रब्रवाम शरदः शतमदीनाः स्याम
शरदः शतं भूयश्च शरदः शतात् ॥३७॥

- यजुः ३६ । २४ ॥

व्याख्यान – त्यो ब्रह्म, चक्षुः = सर्वदृक् चेतन छ तथा देवहितम् = देव अर्थात् विद्वान् हरु का लागी वा मन आदि इन्द्रिय हरु का लागि हितकारक मोक्षादि सुख को दाता हो। पुरस्तात् =सबैको आदि=प्रथम कारण उही हो। शुक्रम्=सबैको कर्ता किंवा शुद्धस्वरूप छ उच्चरत्=प्रलय पछि उही रहन्छ, उसैको कृपा ले हामीहरु पश्येम शरदः शतम्= शये वर्ष सम्म देखौं, जीवेम= बाँचौ, श्रृणुयाम= सुनौं, प्रब्रवाम= बोलौं, अदीनाः स्याम= कहिल्यै पराधीन नहौं, अर्थात् ब्रह्मज्ञान, बुद्धि र पराक्रम सहित इन्द्रिय तथा शरीर सबै स्वस्थ रहून् तपाईंले एसतो कृपा गर्नुहोस् कि हाम्रा कुनै अंङ्ग निर्बल [क्षीण] र रोगयुक्त न हुन् तथा भूयः च शरदः शतात्= तपाईंले कृपा गर्नु होला शयेवर्ष भन्दा पनि बढी हामी देखौं, बाँचौं, सुनौ, बोलौं र स्वाधीन रहौं ॥३७॥

## प्रार्थनाविषयः

या ते धामानि परमाणि यावमा
या मध्यमा विश्वकर्मन्नुतेमा।
शिक्षा सखिभ्यो हविषि स्वधावः
स्वयं यजस्व तन्वं वृधानः ॥३८॥

- यजुः १७। २१ ॥

व्याख्यान– हे सर्वविधायक विश्वकर्मन्= विश्वकर्मन् ईश्वर ! याते= जुन तपाईं द्वारा स्वरचित परमाणि, या अवमा या मध्यमा= उत्तम मध्यम र निकृष्ट त्रिविध धामानि= धाम अर्थात् लोक छन् उत इमा= ती सबै लोक हरु को शिक्षा सखिभ्यः= शिक्षा तपाईंका सखा हामीहरु लाई दिनु होस्, यथार्थ विद्या हुनाले सबै लोक हरू मा सबै सुखी रहने छन्। तथा ई लोक हरु मा हविषि= दान र ग्रहण गर्ने व्यवहार मा हामी चतुर हौं। हे स्वधावः= स्वसामर्थ्यादि धारण कर्ता प्रभो ! हाम्रो तन्वं वृधानः= शरीर आदि पदार्थ हरु वृद्धिगर्ने तपाईं नै हुनुहुन्छ स्वयम्

यजस्व= हाम्रा लागी विद्वान्हरु को सत्कार, सम्पूर्ण सज्जनहरु को सुखप्राप्ती हुने सङ्गति र विद्यादि गुण हरु को दान हजुरले स्वयं गर्नुहुन प्रार्थना छ । हजुरले आफ्नो उदारता ले नै हामी हरु लाई सम्पूर्ण सुख दिनु होला, किञ्च हामीहरु ता तपाईंलाई प्रसन्न पार्न अलिकति पनि समर्थ छैनौं । हामी सर्वथा तपाईंका अनुकूल बर्तिन पनि असमर्थ छौं । परन्तु तपाईं त अधमोद्धारक हुनुहुन्छ एसकारण हामीलाई स्व कृपाकटाक्ष ले सुखी गर्नु होस् ॥३८॥

स्तुतिविषय ः

यन्मे छिद्रं चक्षुषो हृदयस्य मनसो
वातिं तृण्णं बृहस्पतिर्मे
तद्दधातु। शं नो भवतु भुवनस्य यस्पतिः ॥३९॥

- यजुः ३६ । २ ॥

व्याख्यान–हे सर्वसन्धायकेश्वर ! यत् मे चक्षुषः=जुन मेरा आँखा हृदयस्य=हृदय (प्राणात्मा) मनसः= मन, बुद्धि, विज्ञान, विद्या र सबै इन्द्रिय हरु- इनको छिद्रम्= छिद्र= निर्बलता, राग, द्वेष, चाञ्चल्य यद्वा मन्दत्वादि जुन विकार छन्, इनको निवारण [निर्दोषत्व] गरेर सत्यधर्मादि मा तपाईंले धारण गराउँनु होस्, किन भने तपाईं बृहस्पतिःमे तत् दधातु= बृहस्पति= सबै भन्दा ठूलो हुनुहुन्छ, अतः आफ्नो बडप्पन तिर हेरेर एस बृहत् कर्म लाई तपाईंले अवश्य गर्नु होस्, जसले हामीहरु तपाईंको र तपाईंका आज्ञा को पालन मा यथार्थ तत्पर रहौं । मेरा सबै छिद्र हरु लाई तपाईंले नै ढाँकी दिनु होला, भुवनस्य पतिः= तपाईं सम्पूर्ण भुवन हरु का पति हुनुहुन्छ एसर्थ हामी हरु हजुर संग बारम्बार प्रार्थना गर्द छौं कि हाम्रा सबै दिन हरु शम् नः भवतु= तपाईंको कृपादृष्टि ले कल्याण कारक हुन् । हे परमात्मन् ! तपाईं बिना हाम्रो कल्याण गर्ने कोहि छैन, हामीलाई तपाईं को नै सबै प्रकारको भरोसा छ, त्यो हजुरले नै पूर्ण गर्नु हुने छ । ॥३९॥

## प्रार्थनाविषयः

विश्वकर्मा विमना ऽआद्विहाया
धाता विधाता परमोत सन्दृक् ।
तेषामिष्टानि समिषा मदन्ति
यत्रा सप्तऽऋृषीन् परऽएकमाहुः ॥४०॥

- यजुः १७ । २६ ॥

व्याख्यान– हे सर्वज्ञ, सर्वरचक ईश्वर ! तपाईं विश्वकर्मा=विविध जगदुन्पादक हुनुहुन्छ, तथा विमनाः= विविध [अनन्त] विज्ञानवान् हुनुहुन्छ, तथा आद्विहाया= सर्व व्यापक र आकाशवत् निर्विकार, अक्षोभ्य, सर्वाधिकरण हुनुहुन्छ, तपाईं नै समस्त जगत् का धाता= धारण कर्ता र विधाता= विविध तथा विचित्र जगत् का उत्पादक हुनुहुन्छ, तथा परम उत=सर्वोत्कृष्ट हुनुहुन्छ, एवं सन्दृक्= सबैका पाप र पुण्य हरु लाई यथावत देखने द्रष्टा हुनुहुन्छ । जुन मानिस तपाईंको भक्ति, तपाईंमा विश्वास र तपाईंको सत्कार [पूजा] गर्दछन्, तपाईंलाई छोडेर अन्य कसैलाई लेश मात्र पनि मान्दैनन् । ति पुरुष हरु लाई मात्रै सबै इष्टसुख उपलब्ध हुन्छ । अरू हरु लाई हुँदैन । तपाईं आफ्ना भक्त हरु लाई सुख मा नै राख्नु हुन्छ । अरू ति भक्तजन पनि तेषाम् इष्टानि समिषा= सम्यक् स्वेच्छा पूर्वक मदन्ति=सदा परमआनन्द मा नै रहन्छन्, कहिल्यै पनि दुःख पाउँदैनन् । तपाईं परः एकम् आहुः =एक अद्वितीय हुनुहुन्छ, तपाईंको सामर्थ्य मा सप्त ऋृषीन्=सात ऋृषि हरु, अर्थात् पञ्च प्राण, अन्तःकरण र जीव ई सबै प्रलय- विषयक कारण भूत नै रहन्छन् । तपाईं जगत् को उत्पति स्थिति र प्रलय मा निर्विकार आनन्दस्वरूप नै रहनु हुन्छ तेस तपाईंको उपासना गर्नाले हामी हरु लाई सदा सर्वदा सुख रहन्छ ।। ४०॥

## स्तुतिविषयः

चतुः स्रक्तिर्नाभिर्ऋतस्य सप्रथाः स नो
विश्वायुः सप्रथाः स नः सर्वायुः सप्रथाः ।
अप द्वेषोऽअप ह्वरोऽन्यव्रतस्य सश्चिम ॥४१॥

- यजुः ३८ । २० ॥

व्याख्यान– हे महावैद्य ! सर्वरोगनाशकेश्वर ! चारकुना भएको नाभी स्थान [मर्मस्थान] ऋतस्य = ऋत [रस] ले भरिएको नैरोग्य र विज्ञान को स्थान सप्रथाः= तपाईंका कृपा ले सुखयुक्त होस्, तथा तपाईंका कृपाले विश्वायुः= पूर्ण आयु होस् । तपाईं जसरी सप्रथाः= सर्वसामर्थ्य ले विस्तीर्ण हुनु हन्छ, तेसरी नै नः सर्वायुः सप्रथाः= विस्तृत सुखयुक्त विस्तार सहित हामीलाई सर्वायु दिनुहोस् । हे शान्तस्वरूप ! हामी अपद्वेषः= तपाईंका कृपा ले द्वेष रहित तथा अपह्वरः= कम्पन रहित हौं । तपाईंको आज्ञा र तपाईं भन्दा भिन्न लाई लेसमात्र पनि ईश्वर न मानौं । यही हाम्रो व्रत होस् अन्यव्रतस्य= यो भन्दा भिन्न अर्को व्रत लाई कहिल्यै न मानौं । तर तपाईंको मात्र सश्चिम=सेवा गरौं । यही हाम्रो परम वा पक्का निश्चय छ यस परमनिश्चय लाई आफ्नो स्वकृपा ले रक्षा गर्नु होला । ॥४१॥

## प्रार्थनाविषयः

यो नः पिता जनिता यो विधाता
धामानि वेद भुवनानि विश्वा ।
यो देवानां नामधा एक एव
तꣳसम्प्रश्नं भुवना यन्त्यन्या ॥४२॥

- यजुः० १७ ।२७

व्याख्यान– हे मनुष्य हो ! यः = जुन नः= आफ्ना पिता= नित्यपालन गर्ने जनिता= जनक, उत्पादक, विधाता= मोक्षसुखादि सबै कर्म हरु का विधायक [सिद्धकर्ता] विश्वा= समस्तभुवन, लोकलोकान्तर लाई

धामानि वेद=स्थान हरु को स्थिती लाई यथावत जानने र भुवनानि विश्वा= सम्पूर्ण जातमात्र [उत्पन्न मात्र] प्राणी हरु मा विद्यमान छ । यः = जुन देवानाम्=दिव्य सूर्यादि लोक तथा ईन्द्रियादि र विद्वान् हरु को नामधा= नाम एवं व्यवस्थादि गर्ने एक एव=उही एक अद्वितीय हो, अर्को कोहि छैन । उही हाम्रो स्वामी र पिता आदि हो । यसमा शंका राख्नु हुँदैन । तथा तम् संप्रश्नं भुवना यन्त्यन्या=उसै परमात्मा का सम्बन्ध मा सम्यक् प्रश्नोत्तर गर्न मा विद्वान्, वेदादी शास्त्र र प्राणीमात्र उद्यत् भई रहेछन्, किन कि सम्पूर्ण पुरुषार्थ यही हो कि 'परमात्मा', उसको 'आज्ञा' र उसले रचेको 'जगत्' को यथार्थ रूप मा निश्चय गर्नु अर्थात् ज्ञान गर्नु हो । उसैबाट धर्म, अर्थ, काम र मोक्ष ई चार प्रकार का पुरुषार्थ को फल को सिद्धि हुन्छ, अन्यथा हुँदैन । यस हेतुले तन, मन, धन र आत्मा द्वारा प्रयत्न पूर्वक सम्पूर्ण मानिस हरु ले ईश्वर को सहारा लिई अवश्य धर्मादि पदार्थ हरु को यथावत् सिद्धि गर्नु पर्द छ ।

## स्तुतिविषयः

यज्जाग्र॑तो दू॒रमु॒दैति॒ दैव॒ं तदु॑ सु॒प्तस्य॒ तथै॒वैति॑ ।
दू॒र॒ङ्ग॒मं ज्योति॑षा॒ं ज्योति॒रेक॒ं तन्मे॒
मन॑ः शि॒वस॑ङ्कल्पमस्तु ॥४३॥

- यजुः ३४ । १ ॥

व्याख्यान– हे धर्म्यनिरुपद्रव परमात्मन् ! मे मनः= तपाईंको कृपा ले मेरो मन सदा शिवसङ्कल्पम्= धर्म र कल्याण को संकल्प ले युक्त होस्, कहिल्यै अधर्मकारी न होस् । त्यो मन कस्तो छ भने जाग्रतः दुरम् उत् यति= मानिस जागा रहेका अवस्था मा अति टाढा-टाढा आउने-जाने गर्छ, तेसको स्वभाव नै तेस्तो छ तत् उ सुप्तुस्य तथा एवं एति= त्यो मन निदाए का मानिस को पनि अत्यन्तै टाढा-टाढा जान्छ। दुरङ्गमम्= टाढा जाने जसको सभावै छ त्यो ज्योतिषाम् ज्योतिः=

अग्नि, सूर्य आदि र श्रोत्रादि इन्द्रिय हरु ई ज्योति= प्रकाशक हरु को पनि ज्योति= प्रकाशक हो, अर्थात् मन बिना कुनै पनि पदार्थ को प्रकाश कहिल्यै हुँदैन । यो एकम् = एउटा, वडो चञ्चल, वेगवान् मनः= मन तपाईंको कृपा ले नै शिवसङ्कल्प भएको स्थिर, शुद्ध धर्मात्मा र विद्यायुक्त हुन सक्त छ। दैवम् = देव अर्थात् आत्मा को मुख्य साधक भूत, भविष्यत र वर्तमान काल को ज्ञाता हो, त्यो तपाईं कै वश मा छ, तेसलाई तपाईंले यथावत हाम्रो वशमा गरि दिनु होला जसले गर्दा हामी कहिल्यै पनि कुकर्म मा न फँसौं, अपितु सदैव विद्या, धर्म र तपाईंको सेवा मा नै तत्पर रहौं ॥४३॥

## प्रार्थनाविषयः

न तं विंदाथ य इमा जजानान्यद्युष्माकमन्तरं बभूव ।
नीहारेण प्रावृंता जल्प्यां चासुतृपं उक्थशासंश्चरन्ति ॥४४॥

- यजुः १७ । ३१ ॥

व्याख्यान–हे जीवहरु हो ! जुन परमात्मा इमा जजान= ई सम्पूर्ण भुवन हरु लाई बनाउने-विश्वकर्मा हो, न तम् विदाथ= तेस लाई तिमीहरु जान्दैनौ, एसै कारण ले तिमीहरु नीहारेण प्रावृता=अत्यन्त अविद्याले आवृत, मिथ्यावाद, नास्तिकत्व र जल्प्या= वकवाद गर्द छौ, एसले तिमीहरु ले दुःख नै पाउने छौं, सुख होइन । तिमीहरु असुतृपः= केवल स्वार्थ साधन र प्राणपोषण मा मात्र प्रवृत्त भई रहेका छौ तथा उक्यशासश्चन्ति= केवल विषय - भोग हरु का लागि मात्र अवैदिक कर्म गर्नमा प्रवृत्त भई रहन्छौं। अरू जसले यो सम्पूर्ण भुवन रचे को छ, तेस सर्वशक्तिमान्, न्यायकारी परब्रह्म भन्दा विपरीत हिड्दछौं अतएव तिमीहरु उस लाई जान्दैनौ। प्रश्न— त्यो ब्रह्म र हामी जीवात्मा हरु ई दुई एक हुन् कि अलग-अलग ? ऊत्तर— अन्यत् युष्माकमन्तरं बभूव= ब्रह्म र जीव को एकता वेद र युक्ति ले कहिल्यै सिद्ध हुन सक्तैन, किनकि जीव र ब्रह्म को भेद परापूर्व देखि नै रहेको छ। जीव अविद्या आदि दोष

युक्त छ ब्रह्म अविद्या आदि दोष युक्त छैनन् । यसले यो निश्चित छ कि जीव र ब्रह्म न एक थिए न हुन्छन्, किञ्च व्याप्य-व्यापक, आधाराधेय, सेव्य-सेवकादि सम्बन्ध ता ब्रह्मको जीव का साथ छ, यसले जीव ब्रह्म को एकता कसैले मान्न योग्य होइन् ॥४४॥

## प्रार्थनाविषयः

भग एव भगवाँ २ऽअस्तु देवास्तेन वयं भगवन्तः स्याम ।
तं त्वा भग सर्व इज्जोहवीति स नो भग पुर एता भवेह ॥४५॥

- यजुः ३४ । ३८ ॥

व्याख्यान–हे सर्वाधिपते ! महाराजेश्वर ! तपाईं भगः= परमैश्वर्यस्वरूप हुनाले 'भगवान्', हुनुहुन्छ। हे देवाः=विद्वान् हरु ! तेन= [भगवतेश्वरेण प्रसन्नेन तत्सहायेनैव] तेस प्रसन्न भगवान् ईश्वर को सहयोग ले नै वयं, भगवन्तः स्याम=हामीहरु परमैश्वर्य युक्त हौं । हे भग=परमेश्वर! सर्वः=सर्व संसार तन्त्वा=हजुर तपाईंलाई नै जोहवीति =अत्यन्त ग्रहण गर्ने इच्छा गर्द छ, किन भने कुन यस्तो भाग्यहीन मनुष्य छ होला जुन तपाईंलाई प्राप्त गर्ने इच्छा गर्दैन, अतः सःनः=तपाईं हामीलाई पुर एता भवेह=सदैव प्राप्त हुनु होस् हामीबाट कहिल्यै पनि टाडा न हुनु होस् । तपाईंले कृपा गरी हामीलाई यसै जन्म मा परमैश्वर्य को यथावत भोग प्राप्त गराउनु होस् र हामी तपाईंको सेवा मा नित्य तत्पर रहौं ॥ ४५॥

## प्रार्थनाविषयः

गणानाँ त्वा गणपतिँ हवामहे प्रियाणाँ त्वा प्रियपतिँ हवामहे निधीनां त्वा निधिपतिँ हवामहे वसो मम । आहमजानि गर्भधमा त्वम जासि गर्भधम् ॥४६॥

- यजुः २३ । ११ ॥

व्याख्यान–हे समूहाधिपते ! त्वा=तपाईं मेरा गणानाम्= गण= समस्त समूह हरु का पति हुनाले तपाईंलाई गणपतिम् ='गणपति' नामले हवामहे= पुकार्द छु तथा मेरा प्रियाणाम्= प्रिय कर्मकारी, पदार्थ

र जनसमूह का 'पति' पालक पनि तपाईं नै हुनुहुन्छ । एसले त्वा= तपाईंलाई प्रियपतिम्= 'प्रियपति' भनेर मँ अवश्य स्वीकार्दछु एवं मेरा निधीनां त्वा निधिपतिम्=सबै निधि हरु का पति हुनाले तपाईंलाई मँ 'निधिपति' भनेर स्वीकारूँ। हे वसो !=सम्पूर्ण जगत् जुन तपाई को सामर्थ्य बाट उत्पन्न भएर बसेको छ, तेस 'गर्भ' निज सामर्थ्य लाई धारण र पोषण गर्ने भनी मँ तपाईंलाई मात्रै जानूँ गर्भधम्= गर्भ सबैको कारण तपाईंको सामर्थ्य हो, यसैले सबै जगत् लाई धारण र पोषण गर्दछ। यो जीव आदी सशरीर प्राणीजगत् त जन्मिन्छ र मर्द छ परन्तु तपाईं सदैव अजा असि= अजन्मा र अमृतस्वरूप हुनुहुन्छ। तपाईं का कृपा ले मँ अधर्म अविद्या र दुष्टभावादि लाई अजानि=टाढा फ्याँकि दिन्छु तथा हामी सबै तपाईं लाई नै हवामहे=अत्यन्त स्पर्धा [प्राप्तिको इच्छा] गर्द छौं र अब प्रभो तपाईं हामीलाई चाँडै प्राप्त हुनु होस्, तपाईं प्राप्त हुनमा थोरै पनि विलम्ब हुनगयो भने हाम्रो कहीं पनि ठेगान हुने छैन ॥४६॥

## प्रार्थनाविषयः

अग्ने॑ व्रतपते व्र॒तं च॑रिष्यामि॒ तच्छ॑केय॒ं तन्मे॑ राध्यताम्।
इ॒दम॒हमनृ॑तात्स॒त्यमुपै॑मि ॥४७॥

- यजुः १। ५॥

व्याख्यान– हे अग्ने= सच्चिदानन्द, स्वप्रकाशस्वरूप ईश्वराग्ने ! व्रतम्= ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र संन्यास आदि सत्यव्रत हरु को मँ चरिष्यामि= आचरण गर्ने छु, अतः प्रभु ले एस व्रत लाई स्वकृपा ले उपयुक्त राध्यताम्= सिद्ध गरि दिनुहोस्, तथा मँ अनृतात्= अनृत्= अनित्य देहादि पदार्थ हरु बाट अलग्ग भएर यो यथार्थ सत्य जसको कहिल्यै व्यभिचार अर्थात् विनाश हुँदैन । सत्यम् उप एमि= तेस सत्याचरण विद्यादि लक्षणरूप धर्म मा स्थित हुन्छु, तत् शकेयम्= यो मेरो इच्छा लाई तपाईं को कृपा ले पूर्ण गर्न सकूँ जसले मँ सभ्य, विद्वान्, सत्याचरणी र तपाईंको भक्ति ले युक्त धर्मात्मा बनूँ ॥४७॥

## स्तुतिविषयः

य आ॑त्म॒दा ब॑ल॒दा यस्य॒ विश्व॑ऽउ॒पास॑ते प्र॒शिषं॒ यस्य॑ दे॒वाः ।
यस्य॑ छा॒यामृतं॒ यस्य॑ मृ॒त्युः कस्मै॑ दे॒वाय॑ ह॒विषा॑ विधेम ॥४८॥
- यजुः २५ । १३ ॥

व्याख्यान–हे मनुष्य हो ! यः= जुन परमात्मा हामीहरुलाई आत्मदाः= आत्मा र आत्मज्ञानादि को दाता हो, जीवन र प्राणदिने तथा बलदाः= त्रिविधबल दिने- पहिलो मानस-'विज्ञानबल' दोस्रो - 'इन्द्रियबल' अर्थात् श्रोत्रादि को स्वास्थ्यता, तेजोवृद्धि र तेस्रो हो - 'शरीरबल' नैरोग्य, महापुष्टि, दृढाङ्गता र वीर्यादि वृद्धि - ई तीन प्रकार का बल दाता हो जसको प्रशिषम्= अनुशासन [शिक्षा-मर्यादा] लाई देवाः= विद्वान् हरु यथावत् मान्दछन् । सबै प्राणी-अप्राणी जड् चेतन, विद्वान् वा मूर्ख तेस परमात्मा का नियम हरु को कसैले कहिल्यै पनि उल्लङ्घन गर्न सक्तैनन्, जस्तै कि कान ले सुन्ने र आँखा ले हेर्ने यसको उल्टो कसैले गर्न सक्दैन । यस्य= जसको छाया=आश्रय नै अमृतम्= विज्ञानी हरु को 'मोक्ष' कहलाउँछ । तथा जस्को अछाया [अकृपा] दुष्टजन हरु का लागी बारम्बार मरण र जन्मरूप महावक्लेशदायक हो हे सज्जन मित्र हो ! उही एक परमसुखदायक पिता हो । आउनु होस् कस्मै देवाय हविषा विधेम= हामी सबै जना मिलेर ऊ संग प्रेम गरौं, उसमा विश्वास र उसको भक्ति गरौं, कहिल्यै उसलाई छोडेर अन्य लाई उपास्य न मानौं । उसले हामीलाई अत्यन्त सुख दिने छ यसमा अलिकति पनि सन्देह छैन ॥४८॥

## स्तुतिविषयः

उप॑हूताऽ इ॒ह गाव॒ ऽ उप॑हूताऽ अ॒जाव॑यः।
अथो॒ ऽअन्न॑स्य की॒लाल॒ऽ उप॑हूतो गृ॒हेषु॑ नः।
क्षेमा॑य व॒ः शान्त्यै॒ प्र प॑द्ये
शि॒वꣳ श॒ग्मꣳश॒ंयोःश॒ंयोः ॥४९॥ - यजुः ३ । ४३ ॥

व्याख्यान–हे पश्वादिपते ! उत्तम महात्मन् ! तपाईंका नै कृपा ले उपहूताः इह गावः= असल-असल गाई उपलक्षण ले भैंसी, घोडा, हात्ती उपहूताः अजावयः= बाख्रा, भेडा तथा उपलक्षण ले अन्यसबै सुखदायक पशुहरु र अथ अन्नस्य कीलालः= अन्न र सर्वरोग नाशक औषधि हरु को उत्कृष्ट रस नः= हाम्रा गृहेषु= घर हरु मा उपहूतः= सधैं तैयार राख, जसले कुनै पदार्थ को अभाव ले हामीलाई दुःख नहोस् । हे विद्वान्जन् । वः=[युष्माकम्] तिम्रो सङ्गति र ईश्वर को कृपा ले क्षेमाय= क्षेम, कुशलता र शान्त्यैः= शान्ति तथा सर्वोपद्रव-विनाश का लागी शिवम्= मोक्ष सुख र शग्मम्= एस संसार को सुख लाई मँ यथावत् प्रपद्ये= प्राप्त होऊँ । शंयोःशंयोः= मोक्ष सुख र प्रजा सुख ई दुवै को कामना गर्ने जुन मँ हूँ मेरा उक्त ती दुवै कामना हरु लाई तपाईंले चाँडै यथावत् पूरा गरिदिनु होस् । तपाईंको यो स्वभावै छ, कि आफ्ना भक्त हरु को मनोकामना पूरा गर्नु हुन्छ ॥४९॥

## प्रार्थनाविषयः

तमीशा॑नं जग॑तस्त॒स्थुष॒स्पतिं॑ धियञ्जि॒न्वमव॑से हूमहे व॒यम् ।
पू॒षा नो॒ यथा॒ वेद॑सा॒मस॑द्वृ॒धे र॑क्षि॒ता पा॒युरद॑ब्धः स्व॒स्तये॑ ॥५०॥

- यजुः २५ । १८ ॥

व्याख्यान– हे सुख र मोक्ष को कामना गर्ने महानुभाव हरु ! तेस परमात्मा लाई नै हामी हूमहे= भेटन हुन का लागी अत्यन्त स्पर्धा अर्थात् अभिलाषा गर्दछौं उसलाई कतिखेर भेट गर्ने किनकि ऊ ईशानम्= सम्पूर्ण जगत् को स्वामी हो । एवं ईषण [उत्पादन] को इच्छा गर्ने हो । जगतः तस्थुषः पतिम्= दुई प्रकार को जगत् छ । चर तथा अचर ई दुबै प्रकार का जगत् को पालन गर्ने उही हो । धियञ्जिन्वम्= विज्ञानमय, विज्ञानप्रद र तृप्तिकारक ईश्वर भन्दा अर्को कोहि छैन । उसलाई अवसे= आफ्नो रक्षा का लागी हामी स्पर्धा [इच्छा]

ले आह्वान गर्द छौं । यथा= जसरी त्यो ईश्वर नः पूषा= हाम्रा लागि पोषणप्रद छ । तेसैगरी वेदसाम्= धन र विज्ञान हरु को वृद्धि को रक्षिता= रक्षकहो तथा स्वस्तये= निरुपद्रवता का लागी हाम्रो पायुः= पालक उही हो अरू अदब्धः= हिंसा रहित छ, यो ईश्वर जो निराकार र सर्वानन्द प्रद छ हे मनुष्य हो । उसलाई न बिर्स ऊ बिना सुख को कुनै ठेगान छैन ॥५०॥

## स्तुतिविषयः

मयीदमिन्द्र इन्द्रियं दधात्वस्मान् रायो मघवानः सचन्ताम्।
अस्माकꣳ सन्त्वाशिषः सत्याः नः सन्त्वाशिषः॥५१॥

- यजुः २ । १० ॥

व्याख्यान–हे इन्द्र= परमैश्वर्यवन् ईश्वर ! मयि= मँ मा इन्द्रियः= विज्ञानादि शुद्ध इन्द्रिय दधातु=धारण गराउँनु होस् अरू रायः= उत्तम धन मघवानः= तपाईंले हामीलाई चाँडै परम धनवान् सचन्ताम्= तुल्याउनुहोस् । हे सबैकाम पूर्ण गर्नु हुने ईश्वर ! तपाईं को कृपा ले अस्माकम् सन्तु आशिष : सत्याः= हाम्रो आशा सत्य नै हुनु पर्दछ । [पुनरुक्ति अत्यन्त प्रेम र त्वरा= चाँडै को द्योतनार्थ हो] हे भगवन् ! तपाईंले हाम्रो इच्छा चाँडो भन्दा चाँडो सत्य गर्नुहोस् । जसले हाम्रो न्याययुक्त इच्छा सिद्ध हुनाले वा पूर्ण हुनाले हामीहरु सदा परमानन्द मा रहनसमर्थ हौं । ॥५१॥

## प्रार्थनाविषयः

सदसस्पतिमद्भुतं प्रियमिन्द्रस्य काम्यम् ।
सनिं मेधामयासिषꣳ स्वाहा ॥५२॥

- यजुः ३२ । १३ ॥

व्याख्यान– हे सभापते ! विद्यामय न्यायकारिन् ! सभासद सभाप्रिय! "सभानै हाम्रो न्यायकारी राजा हो" एस्तो इच्छा भएका हामीलाई बनाउनु होस् । तपाईंको यस्तो कृपा होस्, हामीले कुनै पनि

एक जना मानिस लाई कहिल्यै पनि राजा न बनाऔं। किन्तु [सभाबाटै सुख दायक काम गरौं] हजुरलाई नै हामी सभापति=सभाअध्यक्ष राजा निश्चय मानौं। तपाईं अदभुतम् =अद्‌भुत, आश्चर्य र विचित्र शक्तिमय हुनुहुन्छ । तथा प्रियम्= प्रियस्वरूप हुनुहुन्छ । 'इन्द्र जुन जीवात्मा छ। तेसलाई काम्यम्= कमनीय अर्थात् कामना गर्न योग्य तपाईं नै हुनुहुन्छ। सनिम्= तपाईं नै सबै जीव हरु का लागी भजनीय र सेव्य हुनुहुन्छ। मेधाम्= विद्या, सत्यधर्मादि धारण युक्त बुद्धि लाई हे भगवन्! मँ अयासिषम्= याचना गर्दछु र तपाईंले कृपागरेर त्यो मँलाई दिनुहोस्। स्वाहा= एही 'स्व' स्वकीयवाक् 'आह' भन्द छ कि एक ईश्वर देखि बाहेक जीवात्मा हरु का लागी कुनै अर्को सेव्य छैन। एही वेद मा ईश्वराज्ञा छ अतः सबै मानिस हरु ले मान्न योग्य छ ॥५२॥

## स्तुतिविषयः

यां मेधां देवगणाः पितरश्चोपासते।
तया मामद्य मेधयाग्ने मेधाविनं कुरु स्वाहा ॥५३॥

- यजुः ३२।१४॥

व्याख्यान –हे सर्वज्ञ अग्ने! परमात्मन्! यां मेधाम्= जुन विज्ञानवती र यथार्थ धारणावती बुद्धि लाई देवगणाः= देवसमूह अर्थात् विद्वान् हरु को समूह ले उपासते= धारण गर्द छन्, तथा यथार्थ पदार्थविज्ञानवान् पितरः= पितृ हरु जुन बुद्धि को उपाश्रित हुन्छन्, तेसै बुद्धि का साथ अद्य=आज यसै समय कृपागरी माम् मेधाविनं कुरु =मँलाई मेधावी बनाउनु होस्, स्वाहा=हजुरले एसलाई अनुग्रह र प्रीति ले स्वीस्कार गर्नु होस्, जसले मेरो सम्पूर्ण जडता निवारण होस् ॥५३॥

## प्रार्थनाविषयः

मेधां मे वरुणो ददातु मेधामग्निः प्रजापति ः।
मेधामिन्द्रश्च वायुश्च मेधां धाता ददातु मे स्वाहा ॥५४॥

- यजुः ३२।१५॥

व्याख्यन–हे सर्वोत्कृष्ट ईश्वर ! तपाईं वरुणः= वर=वरणीय आनन्द स्वरूप हुनुहुन्छ, स्वकृपाले मँलाई मेधाम्= मेधा=सर्वविद्या सम्पन्न बुद्धि दिनु होस् । तथा अग्निः= विज्ञानमय र विज्ञानप्रद, प्रजापतिः= समस्त संसार का अधिठाता तथा पालक इन्द्रः= परम ऐश्वर्यवान् वायुः= विज्ञानवान् एवं अनन्तबल तथा धाता= सम्पूर्ण जगत् लाई धारण र पोषण गर्नुहुने प्रभु तपाईं ले मे मेधां ददातु= मँलाई अत्युत्तम मेधा[बुद्धि] दिनु होस् । स्वाहा= एस प्रार्थनालाई हजुर ले प्रीति पूर्वक स्वीकार गर्नु होला । ॥५४॥

## स्तुतिविषयः

इदं मे ब्रह्म च क्षत्रं चोभे श्रियम श्रियमश्नुताम् ।
मयि देवा दधतु श्रियमुत्तमां तस्यैं ते स्वाहा ॥ ५५॥

- यजुः ३२ । १६ ॥

व्याख्यान– हे महाविद्य ! महाराज ! सर्वेश्वर ! मे ब्रह्म= मेरा ब्रह्म अर्थात् विद्वान् र क्षत्रम् =राजा महाचतुर, न्यायकारी, शूरवीरक्षत्रिय उभे= ई दुवै तपाईंका अनन्त कृपा ले यथावत् अनुकूल हुन् । श्रियम्= सर्वोत्तम् विद्यादिलक्षण ले युक्त महाराज्यश्री मा हामी प्राप्त हौं । हे देवाः = विद्वज्जन ! तपाईंहरुले उत्तमांश्रियम्= दिव्य ईश्वर का गुण, परमकृपा आदि तथा विद्यादिलक्षणसमन्वित श्री लाई मँ मा दधतु= अचलता पूर्वक धारण गराउनु होस् तस्यै= तेस श्री लाई मँ अत्यन्त प्रीतिपूर्वक स्वीकार गरूँ र त्यो श्री लाई विद्यादि सद्गुण र सम्पूर्ण संसार को हित का लागी तथा राज्यादि प्रबन्ध का लागी व्यय गरूँ ॥५५॥

इति श्री मत्परमहंसपरिवाजकाचार्याणां श्रीयुतविरजानन्द
सरस्वतीस्वामिनां महाविदुषां शिष्येण
दयानन्दसरस्वतीस्वामिना
विरचित आर्याभिविनये
द्वितीयः प्रकाशः
सम्पूर्णः ॥

१. अनेक पटक माँग्नु ईश्वर संग अत्यन्त प्रीति द्योतनार्थ र सद्यः दानार्थ हो । बुद्धि भन्दा उत्तम पर्दाथ अर्को छैन् । त्यो हुँदा जीव लाई सबै सुख प्राप्त हुन्छन् । यस हेतुले परमात्मा संग बारंबार बुद्धि कै याचना गर्नु श्रेष्ठ कुरा हो । –महर्षि